१.

महाकाल बाबाको थानमा मिरमिरी घाम झुल्किसक्दा पनि पश्चिमपट्टि फर्केको दार्जिलिङको चोकबजारमा अझै घाम झुल्केको थिएन। बिहानीपख, टाढा देखिने पूर्वतिरका ती नीला पहाडहरूबाट लहरै-लहर मालाजस्ता भएर झरेका उपत्यकाहरूमा पनि सूर्यका लामा-लामा किरणको छाप अहिलेसम्म परेकै थिएन। केवल प्रातःकालदेखि देखिने उत्तरपट्टिको पर्वतराज हिमालयका ती चुच्चा टाकुराहरूमा भने सुनौला तर गुलाफी किसिमको टलक रमाइलो गरी धेरै बेरदेखि खेलिरहेको थियो। तर जति-जति सूर्य मास्तिर आकाशमा उक्लँदै जान्थे, उति-उति त्यो टलक पनि फिक्का हुँदै, हराउँदै त्यस ठाउँमा चाँदीको जलपको रूपमा बिस्तार-बिस्तार परिवर्तन हुँदै जान्थ्यो।

महाकाल बाबाको थानवरिपरि रातभरि शीत र चिसो हावाले काम्न लागेका रुखका पातहरूमा बल्ल सूर्यका पहेँला किरण पर्दा चारैतिर प्रकृति एक्कासि सुनको जलप लाएर हाँसेझैँ देखियो। धेरै शीतका थोपाहरू रुखका पातमा काम्दै झुन्डिरहेका थिए, ती पनि अहिले त सुनजस्तै भएर चम्किरहेका थिए। गुराँसको बोटका हाँगाहरूमा भर्खर-भर्खर गुलाफी र गहिरो रातो रङमा फक्रन लागेका फूलहरू थिए, तिनलाई पनि सूर्यको उष्ण किरणले अहिले नै म्वाइँ खाला-खाला जस्तो देखिन्थ्यो।

सधैँ अग्लो डाँडामा रहेको महाकाल बाबाको थानमा पहिले घाम लाग्थ्यो। अनि पछि पूर्वपट्टि फर्केर बसेको भोटेबस्तीतिर घाम ओर्लंदै झर्थ्यो। पछिल्तिर रहेको चोकबजारतिर भने हत्तपत्त घामै नलाग्ने हुनाले त्यतापट्टि अहिलेसम्म पनि शून्यजस्तै थियो। त्यहाँ शीतको अझै ठूलो साम्राज्य थियो।

माघ-फागुनको उत्कट जाडो। त्यसैले पश्चिमतिर फर्केर बसेको सारा दार्जिलिङ सहर जाडोले कक्रिरहेको थियो। वारिपारि देखिने घर, कोठी र तिनका राता-राता छाना तथा बाटाघाटा, रेलिङ, पार्क, हावाघर— ती सब अहिलेसम्म जाडोले कठ्याङ्ग्रिएकै जस्ता देखिन्थे। अग्ला-अग्ला धूपीका रुखहरूसमेत बिहानको जाडो र शीतको प्रहार सहन गर्दै चुपचाप ठिङ्ग उभिरहेका जस्ता देखिन्थे।

आज दिन त राम्रै उघ्रेको थियो, तापनि जाडोले भने मुटु छेड्थ्यो। यस्तै जाडोको बिहान एक-दुई मानिस छातीमा मुन्टो घुसारेर दुवै हात पकेटमा हाली शून्य भावले यत्रतत्र हिँडिरहेका देखिन्थे। चोकबजारका पानका पसलहरू बिस्तार-बिस्तार उघ्रन लागेका थिए। चोकमुन्तिर रक्सी बेच्ने गड्डीखानको एउटा साँघुरो गल्लीबाट भने रक्सी र जाँडको तीव्र दुर्गन्ध लिएर बिहानको हावा अझै बगिरहेकै थियो।

चोकबजारको फाँटबाट झरेको लामो सिमेन्टको सिँढी तलतिर गड्डीखानको ओरालो जाने छिँडीमा जतातत्तै मैला र हिलो थियो। सडकको छेउतिर आलु र प्याजका बोक्राहरू, कुखुराको फुलका खोस्टाहरू यत्रतत्र देखिन्थे— नालीमा मैला-कसिङ्गर थुप्रिएर कुहिएका सागसब्जीको सानो पहाडजस्तो जमेको थियो। गड्डीखानको छिँडीबाट जाँदा निकै तलतिर भित्तापट्टि टिनले बारेको एउटा थोत्रो घरजस्तो खाली ठाउँ थियो। त्यसलाई घर नभनेर झुप्रो नै भने हुन्छ- किनभने त्यसको छानो पुरानो मट्टितेलको टिनलाई सोझ्याएर बनाएको थियो तथा हावाले उडाउला भनी त्यसलाई ढुङ्गाले थिचिराखेको थियो।

त्यो एउटा उराठलाग्दो झुप्रो थियो- भित्ताको सहारामा एक-दुई काठ गाडी टिनले बारेर एउटा मानिस सुत्नसम्म हुने सानो ठाउँ बनाएको थियो। त्यहाँ न बलियो ढोका थियो, न भित्ता, न त बिजुली। ढोकाको नाममा दुई-चारवटा मर्किसकेका काठ जोडेर आग्लो लाउनेसम्म बनाएको थियो। त्यहाँ आधुनिक 'फर्निचर'को नाममा केवल फुको धुलोसरीको भुइँमा दुई-चारवटा पुराना फल्याक मात्र ओछ्याइएका थिए।

त्यही ठाउँमा एउटा कुकुर गुँडुल्किएर कुनापट्टि सुतिरहेको थियो। अनि त्यसैको छेउमा एक जना मानिस पनि आफ्नो बोरा-थाङ्नामा गुटुमुटु भएर एक डल्लो परेर निर्विकार अवस्थामा सुतिरहेको थियो।

दिन चढ्दै गयो। चोकबजारका अग्ला-अग्ला बिल्डिङ र सेता घरहरूमा अब न्यानो घामको किरणले स्पर्श गर्दै लग्यो ! तैपनि त्यस झुप्रोमा सुत्ने त्यो मानिस र कुकुर सुती नै रहे... मानौँ, कुकुर र त्यो मानिसमा सुत्नको निम्ति होड भइरहेको छ।

बिहानको चिसो हावाको प्रबल आघात खाएपछि बल्ल त्यो मानिसको निद्रा टुट्यो र निद्राबाट जुर्मुराउँदै उठ्यो। एकातिर दुःस्वप्नबाट झस्केर ब्युँझेजस्तो गरी उठेर ऊ टुक्रुक्क बस्यो।

जाडोले कक्रिएकोले ऊ एक डल्लो परिरहेको थियो। निकै बेरसम्म ऊ त्यत्तिकै भावशून्य अवस्थामा निश्चेष्ट बसिरह्यो। त्यसपछि उसले आफ्नो सिरानमुनिबाट दियासलाई र बिडी झिकेर सल्कायो।

कुकुर भने अझै अचल भएर सुतिरहेको थियो। त्यो मानिस केही बेरसम्म बिडी फुक्दै शून्य भावले त्यस कुकुरतिर हेरिरह्यो।

कुकुर आनन्दले मग्न सुतिरहेको देखेर त्यस मानिसको मनमा अलिकति हिंसा भयो। तैपनि त्यसले एकनासले कुकुरलाई हेरिरह्यो।

एक छिनपछि त्यसका मनमा के विचार आयो- त्यसले मुखभरि बिडीको धुवाँ तानेर कुकुरको नाकमा 'फू' गरेर फुकिदियो। त्यति गरेपछि बल्ल त्यो कुकुर पनि कान फटफटाउँदै उठ्यो। मन नपरी-नपरी आङ तन्कायो अनि लामो जिभ्रो निकालेर हाई काढ्दै त्यस मानिसको मुखमा पुलुक्क हेऱ्यो। कुकुरलाई हेरेर त्यो मानिस मुसुक्क हाँस्यो, फेरि आफ्ना दुवै घुँडाको माझमा मुन्टो त्यसले घुसाऱ्यो र बिडी तान्न थाल्यो।

यसरी केही बेरसम्म गम्भीर चिन्तामा डुबेपछि त्यो मानिस कतै जान तयार भयो। उसले कुनामा राखेको आफ्नो झोली देब्रे काँधमा भिऱ्यो, आफ्नो कालो चिल्लो लौरो दाहिने काखीमा च्याप्यो अनि दुवै हत्केलामा काठको टेक्रे समातेर त्यसैको सहाराले त्यो झुप्रोबाट निस्क्यो र ऊ गड्डीखानको उकालो लाग्यो... कुकुर पनि उसको पछिपछि हिंडिरहेको थियो।

२.

मानिसहरूले उसलाई लङ्गडा भनी उसका बिग्रेका अङ्गहरू देखाएर ठट्टा गर्थे, जिस्क्याउँथे। कोही मानिस सुकिलो लुगा लाएको हेर्दा भलादमीजस्तो भए लङ्गडा केही प्रतिवाद गर्दैनथ्यो, केवल आफ्नो उपहास गर्नेको मुखमा निःसहाय भएर केही नभनी टुलुटुलु मात्र हेरिरहन्थ्यो। तर लङ्गडाको त्यो हेराइमा एउटा भयानक घृणा तथा प्रतिहिंसाको ज्वाला अङ्कित भएको हुन्थ्यो। तर केटाहरू तथा बालबालिकाहरूले उसलाई खिज्याए भने ऊ आगो हुन्थ्यो।

सहरका बदमाश केटाकेटीहरूको एक दल थियो- तिनीहरू उसलाई 'भुइँभालु' भनी खिज्याउँथे। ऊ रिसले भुतुक्क भएर आफ्नो लौरो टिपी झटारो हान्न खोज्थ्यो। त्यति बेला कसरी उसका दुवै हातमा अपूर्व बल आउँथ्यो ! सुकेर खुम्चिएका दुवै खुट्टालाई घिसार्दै, लङ्गडाले दुवै हातको काठ छिटो-छिटो सार्दै आफूलाई जिस्क्याउने केटाहरूलाई लखेट्थ्यो। स्कुल जान लागेका केटाहरूसमेत त्यहाँ सामेल हुन्थे र धेरै बेरसम्म यसरी लङ्गडालाई विरक्त पार्थे। लङ्गडा पनि असिना-पसिना हुँदै ती शत्रुहरूलाई खेद्न छाड्दैनथ्यो। केटाकेटीहरूको भीड जम्थ्यो।

कति वर्षदेखि यस्तै जीवन उसले यापन गरिरहेको थियो। त्यसैले कुनै केटाकेटी आफ्नो अघिल्तिरबाट गइरहेको छ भने उसले शत्रु नै सम्झन्थ्यो र भयातुर दृष्टिले त्यसलाई हेर्दथ्यो। केटाकेटी देख्नेबित्तिकै उसले यस्तो शङ्कित हृदयले हेर्थ्यो- जस्तो टोक्ने बानी भएको कुकुरले हिँडिरहेको मानिसलाई फर्केर हेर्दछ !

आफूलाई जे भनोस्, आफ्ना बिग्रेका अङ्गहरूको जति नै उपहास गरोस्, ऊ सहन गर्न सक्थ्यो। परन्तु आफूलाई 'भुइँभालु' भनी खिज्याएको लङ्गडाले पटक्कै सहन सक्दैनथ्यो। दिउँसो आफूलाई यसरी विरक्त पार्ने शत्रुहरूमाथि बदला लिन नपाउँदा उसको साह्रै नै चित्त दुख्थ्यो र राति जब ऊ सुत्थ्यो, त्यति बेला ती कुराहरू मनमा सबै सम्झिरहन्थ्यो। चारैतिर चकमन्न हुन्थ्यो ! चारैतिर शून्य हुन्थ्यो। आफूलाई विरक्त पार्ने शत्रुहरूलाई सम्झेर उसलाई कहिले साह्रै दुःख लाग्थ्यो, कहिले रिस उठ्थ्यो र ती एक-एक शत्रुलाई गाली गर्दथ्यो- मध्यरातमा धेरै बेरसम्म ऊ एक्लै गुनगुनाइरहन्थ्यो।

ती दुष्ट केटाहरूबाहेक संसारमा उसको अरू कुनै शत्रु थिएन। कुनै विरोधी थिएन। उसलाई डर र घृणा थियो भने सहरका तिनै केटाहरूको। स्कुल जान लागेका केटाहरूका दल देख्यो भने ऊ बिस्तारै पसलको आडमा लुक्थ्यो वा नदेखेजस्तो गरी ऊ टोलिन्थ्यो। आफ्नो अघिल्तिरबाट ती केटाहरू गइसकेपछि मात्र लङ्गडाले मुन्टो फर्काउँथ्यो र पछिल्तिरबाट राता-राता आँखा पारेर छड्के नजरले हेरिरहन्थ्यो- उसका आँखामा त्यस बखत क्रोध, विभीषिका र असह्य घृणा नाचिरहन्थे।

ती केटाहरूलाई देख्नासाथ उसको अनुहार एकाएक गम्भीर र आतङ्कपूर्ण हुन्थ्यो। ती केटाहरू अदृश्य भएपछि मात्र उसले अरूतिर नजर घुमाउँथ्यो र सन्तोषको लामो सास फेर्दथ्यो। उसका आँखामा वेदनाले भरिएको हाँसोको क्षीण आभास झल्कन्थ्यो- ठूलो विपदबाट निष्कृति पाएजस्तो गरी ऊ हाँस्न-हाँस्न खोज्थ्यो।

लङ्गडालाई बिहान र बेलुकीभन्दा पनि दिउँसो जब स्कुलका केटाहरूको टिफिनको छुट्टी हुन्थ्यो, उस बेला जीउ जोगाउन धौ-धौ पर्थ्यो। लङ्गडा बजारतिर बसेर मागिरहेको हुन्थ्यो- टिफिनको छुट्टीमा केटाहरू दलका दल मिलेर आउँथे अनि लङ्गडालाई सडकमा देख्नासाथ 'भुइँभालु, भुइँभालु' भनी जिस्क्याउँथे। लङ्गडा नसुनेको जस्तै गरी आफ्नो लौरो टिपेर दुइटा काठका सहाराले छिटो-छिटो हात-खुट्टाले घस्रँदै कुनै पसलको कुनामा गएर आड लिन्थ्यो र भित्तापट्टि फर्केर बिडी सल्काउने निहुँ गरी धेरै बेर टोलिरहन्थ्यो। तर ती दुष्ट केटाहरू लङ्गडाको नजिकै आएर उसैलाई चारैपट्टिबाट घेरी 'भुइँभालु' भनेर जिस्क्याउँथे, चिच्याउँथे- अझ कसैले त लङ्गडाको अघि भालु हिँडेको विकृत चालको नक्कल गरी लङ्गडालाई खिज्याउँथ्यो पनि। लङ्गडाले यतिञ्जेल सहन गरिरहेको रिस एक्कासि सोडा-पानीको ग्यासजस्तो हुस्स भएर आउँथ्यो। फनक्क फर्की लौरो टिपेर केटाहरूलाई झटारो हान्थ्यो र गाली वर्षाउन लाग्थ्यो। केटाहरू निमेषमा यत्रतत्र भाग्थे।

यसैले लङ्गडा दिउँसो चोकबजारको मिठाई-पसलको अघिल्तिर अथवा अरू पसलेहरूकहाँ केही मागिरहेको छ भने अनायास उसको दृष्टि माथिको अग्लो टाउन हलको घडीमाथि पर्दथ्यो। टिफिन हुने बेला भयो भने लङ्गडा बिस्तारै त्यहाँबाट उठेर साँघुरो गल्लीमा जान्थ्यो र त्यहाँ धेरै बेर बसिरहन्थ्यो। नत्र जितेन-झोडामाथि हावाघरमा माग्नेहरूको बस्ने अड्डाजस्तै छ, त्यहीं गएर ऊ पनि बसिरहन्थ्यो।

अरू बेला दिनभरि बजारमा गएर माग्थ्यो। सडकको छेउमा बसेर बाटा हिँड्नेलाई भन्थ्यो- 'हजुर, एक-दुई पैसा दया होस् न।' कहिलेकाहीँ कवित्व भाषामा माग्ने गर्थ्यो- 'हजुर, गरिब-गुरुबालाई कहिले त दया होस् न... धर्म हुन्छ हजुर, धर्म !' अनि हात पसार्थ्यो। एकन्नी-दुवन्नी हातमा पर्दा ऊ मुसुक्क हाँस्थ्यो !

दिनभरि मागेको पैसाले उसलाई सधैँ खान पुग्दैनथ्यो र होटेलको अघिल्तिर वा चिया वा पुरी-मिठाईको पसलअघिल्तिर गएर टुक्रुक्क बसिरहन्थ्यो। केही खानेकुरा नपाएसम्म ऊ त्यहाँबाट जाँदैनथ्यो। यसरी घण्टौँ त्यहाँ बसेपछि कहिले उसले रोटीको टुक्रा वा मिठाई पाउँथ्यो कि त उब्रेको भात, मासु र बासी तरकारी पाउँथ्यो।

खानेकुरा पाएपछि लङ्गडा बडो प्रसन्न भएर दुवै हातले थापीकन कृतज्ञताको स्वरले भन्थ्यो- "लौ हजुर... गरिब-गुरुबालाई दया गर्नुभयो !" पोल्टाबाट फाटेको रुमाल झिकेर खानेकुरा पोको पारी कतै लगेर खान्थ्यो। बजारको एउटा भतुवा कुकुर पनि सधैँ त्यसका पछि-पछि जान्थ्यो, त्यो पनि लङ्गडालाई पछ्याउँथ्यो र उसले खाएको हेरिरहन्थ्यो। पहिले-पहिले त लङ्गडाले त्यसलाई हेर्नै सक्दैनथ्यो र धपाउने कोसिस गर्थ्यो तर त्यो कुकुर भने जान मान्दैनथ्यो। दुई-चार कदम पछि हटेर फेरि लङ्गडाको नजिकै आई दयनीय आँखाले उसले खाएको हेरिरहन्थ्यो। त्यो देखेर लङ्गडाको हृदयमा गम्भीर मानवीय प्रश्नहरू आउँथे- उसले मनमनै विचार गर्थ्यो।

'यो कुकुरलाई यसरी धपाउँदा पनि जाँदैन। मेरो पछि-पछि लागिरहन्छ। तर भोक-तिर्खा भनेको सबैको उही हो- के हामी मानिस, के पशु ! बरा, यो पनि त म जस्तै होला। यो पनि त अर्काको दया र भिक्षाले संसारमा बाँचिरहेको होला। गरिबले गरिबकै कष्ट बुझ्दछ। धनीहरू जो मोटरमा हावा खाइहिँड्छन्, जो होटेलतिर मीठो-मीठो खाने थोक खाइहिँड्छन्, जोसित आज हजारौँ-लाखौँ रुपियाँ छ, के कुनै दिन उनीहरूले यो बिचरा माग्नेले भरपेट खाएको हो/होइन भनी सम्झेर एक दिन यसो ख्वाएको छ? ओहो ! माग्नेलाई हेरेर, गरिबहरूलाई देखेर कुनै दिन मनमा दया जागेको छ? दुनियाँमा स्वाङ गर्न पाए मोराहरू खुसी हुन्छन्। बरु गरिबको मनमा गरिबमाथि दया जाग्दछ। एउटा भिखारीले अर्को भिखारीको कष्ट जान्दछ। यो कुकुर पनि संसारमा म जस्तै मागी खाने एउटा प्राणी होला।'

ती कुराहरू विचार गर्दा-गर्दै दया र गम्भीर सहानुभूतिले उसको हृदय आर्द्र हुन्थ्यो। कुकुरलाई अँगालेर आफ्नो छातीमा टाँसी जीवनको एउटा साथी बनाउने इच्छा हुन्थ्यो। कुकुरलाई उसले छेउमा बोलाएर खानेकुरा दिन्थ्यो र एक छिन मुसार्दथ्यो। कुकुर पनि अत्यन्त आनन्दले पुच्छर हल्लाउँदै लङ्गडाको मुखमा हेरिरहन्थ्यो। त्यो कुकुर पनि दिनभरि अब लङ्गडासितै बसिरहन्थ्यो- त्यो यताउता कतै नगई लङ्गडाकै पछि-पछि जान्थ्यो।

यसो हुँदा कुकुर र लङ्गडाको बीचमा एउटा यस्तो घनिष्ठता बढ्दै गयो, दुवैको हृदयमा यस्तो सहानुभूति सञ्चार हुँदै गयो, कुनै दिन लङ्गडाले कुकुरलाई देखेन भने ऊ छटपटाउन लाग्थ्यो। कुकुरलाई एक दिन देखेन भने लामो यात्रामा आफूसित हिँड्न लागेको साथीलाई एक्कासि हराएजस्तो उसलाई लाग्थ्यो। अनि कुकुर पनि यताउता डुलेर आएपछि फेरि लङ्गडाकै साथमा घनिष्ठ आत्मीयजस्तो भएर बसिरहन्थ्यो। कहिलेकाहीँ लङ्गडा कतै गएको छ भने तथा लङ्गडालाई बजारमा देखेन भने त्यो कुकुर सडक र गल्लीहरू सुँघ्दै लङ्गडा भए ठाउँमा लुखुर-लुखुर घुम्दै आइपुग्थ्यो; कुकुरलाई देखेर लङ्गडाको अनुहार प्रसन्नताले दीप्त हुन्थ्यो अनि ऊ कुकुरलाई धेरै बेरसम्म मुसारिरहन्थ्यो। कुकुर पनि खुसीले पुच्छर हल्लाउँदै लङ्गडाको अनुहार चाट्ला-चाट्ला जस्तो गर्थ्यो।

केही दिनपछि त्यो कुकुर लङ्गडासितै बस्न थाल्यो। दिनभरि लङ्गडालाई नछोड्ने भयो। लङ्गडाले पनि आफूले खाएको आधा रोटीको टुक्रासमेत कुकुरलाई दिन्थ्यो। भात-मासु खान पाएको दिन कुकुरलाई पनि केही मासु-भात मुछेर आफ्नो छेउमा खान दिन्थ्यो। तर कहिलेकाहीँ कुकुरले थपक्क मुख गाडेर लङ्गडाले खान लागेको मासुको टुक्रा झिकिहाल्थ्यो। लङ्गडा रिसले भुतुक्क हुन्थ्यो- लौरो टिपेर कुकुरलाई झटारो हान्दै भन्थ्यो, "काँडा ! टिठ्याएर खान दिएकोले नहुने !"

तर लङ्गडाको रिस एकै छिनपछि हराउँथ्यो। रिस मरेपछि आफूले अलिकति उबारेर कुकुरलाई फेरि खान दिन्थ्यो। लङ्गडाको संसारमा आफ्नो भन्नु कोही थिएन- न स्त्री, न छोरा-छोरी, न भाइ, न बहिनी। उसको सङ्गीहीन, बन्धुहीन एकान्त जीवनमा दुःख-सुखको साथी भने पनि, आत्मीय भने पनि त्यही एउटा कुकुर थियो।

यसरी हिउँदको मुटु छेड्ने याममा पनि तथा दार्जिलिङको वर्षाको मुसलधारे पानी-झरीमा पनि यी दुवै सँगै हुन्थे।

पहिले-पहिले त लङ्गडा स्टेसनको बाटाछेउमा बसेर माग्ने गर्थ्यो। दिनभरि कुइरो र बादलले डम्म छोपिएको पृथ्वीको एकान्त कुनामा बसेर मागिरहन्थ्यो। बेलुकी भएपछि केही खानेकुरा जोगार गरी स्टेसनको वरतिर बाटामुनि हावाघरमा बसेर खान्थ्यो। रात पर्न थालेपछि त्यही हावाघरको छेउमा सडकको मुन्तिर भित्तापट्टि सिमेन्टका खम्बाहरू थिए, त्यहाँ गुफाजस्तो ओत लाग्ने ठाउँ पनि थियो। लङ्गडा त्यहीँ गएर अरू माग्नेहरूसित सुत्थ्यो।

कति हिउँद, कति वर्षा उसले काटिसकेको थियो। अब उसको संसार नै बेग्लै भइसकेको थियो। मागेर खानु जन्मसिद्ध अधिकारजस्तै उसले ठान्थ्यो। जन्मँदा आफू माग्ने नै भएर जन्मेको भनी ऊ सम्झन्थ्यो। आफ्नो पूर्वजन्मको पापले मानिसलाई विधाताले लङ्गडा बनाई, अन्धा बनाई, कुँजे बनाई, शक्तिहीन बनाई संसारको यातना र कष्ट भोग्न पठाएका होलान् भनी ऊ विचार गर्थ्यो। वर्षौँ यही एकनासले जीवन यापन गरिरहेकोले मागी-मागी पेट भर्नु अब उसले आफ्नो धर्म ठान्न थालेको थियो। सभ्य र परिष्कृत समाजदेखि धेरै पर, गृहहीन भएर उसले संसारमा आफ्नो एकान्त जीवन बिताइरहेको थियो।

सारा संसारले उसलाई अवहेलना गरे पनि, निर्दयतापूर्वक अमानुषिक व्यवहार गरे पनि ऊ मूक भएर नै सबै सहन गरिरहन्थ्यो। सधैँ भगवान्लाई सम्झन्थ्यो र उसको न्याय र अन्यायको विषयमा विचार गरिरहन्थ्यो। भगवान्उपर उसको अलिकति पनि अविश्वास र शङ्का थिएन। सृष्टिकर्ताले बनाएको यो पृथ्वी सबै राम्रो छ- त्यहाँ त नराम्रा कुरा केही छैनन्; मरुन्ज्याल मानिसले आफ्नो-आफ्नो कर्तव्य गरिरहनुपर्छ भन्ने उसलाई लाग्थ्यो।

तर कहिलेकाहीँ असल अङ्ग हुने राम्रा मानिसहरूले आफ्ना विकृत अङ्गहरू हेरेर हिस्सी उडाउँदा भने उसलाई अन्तस्तलसम्म आघात लाग्थ्यो। उसले आफ्ना अङ्गहरूतिर हेर्दथ्यो। आफ्नो अघिल्तिरबाट गइरहेको असल मानिसलाई पनि हेर्दथ्यो।

अनि एउटा गम्भीर प्रश्न उसको हृदय-कोटरमा आउँथ्यो...। उसले आकाशतिर उँभो टाउको उठाएर एक छिन हेर्दथ्यो। उसको हृदय उदास हुन्थ्यो। लङ्गडाको आत्मा दुःखित हुन्थ्यो, उसको आँखामा आँसु छल्किन लाग्थ्यो- त्यसबेला भने सृष्टिकर्ताको न्याय हो वा अन्याय, उसले बुझ्ने चेष्टा गर्थ्यो।

बाहिर उत्तिकै घनघोर वर्षा भइरहेको हुन्थ्यो। ऊ कतै ओत लागेर उदासमय प्रकृति हेरिरहन्थ्यो। दार्जिलिङ सहरमा बाक्लो धुवाँजस्तै चारैतिर हुस्सु लागेको हुन्थ्यो, कि त सिमसिमे पानी परिरहेको हुन्थ्यो। लङ्गडा थोत्रो छाता ओढी सडकको एक किनारमा नबोली घण्टौँ बसिरहन्थ्यो। त्यहाँ हुस्सुले डम्म ढाकेको पृथ्वी हेर्नु उसलाई साह्रै मन पर्थ्यो, त्यो हेर्दा उसले एउटा रहस्यमय आनन्द अनुभव गर्थ्यो। आफ्नो छेउबाट हिलोदेखि जोगिँदै सुकिलो लुगा लाउने स्त्री-पुरुष एकोहोरो हिँडिरहेका हुन्थे। गोरु-गाडाहरू गइरहेका हुन्थे। पिच लाएको कालो सडक भिजेर टल्किरहेको हुन्थ्यो अनि त्यहाँ रङ्ग-बिरङ्गका मोटरहरू हावाजस्तो वेगले दगुरेर हुस्सुभित्र बेपत्ता हुन्थे।

त्यो, आफूले यथार्थमा अनुभव नगरेको, त्यो कल्पित संसार हेर्दा उसलाई बडो रहस्यमय लाग्थ्यो। अनेक गम्भीर प्रश्न उसका मनमा आउँथे। उसको हृदय गम्भीर प्रश्नले भारी हुन्थ्यो। यसरी घण्टौँ आफ्नै विचारमा, आफ्नै कल्पनामा, आफ्नै संसारमा ऊ डुबिरहन्थ्यो। पानी दिनभरि परिरहन्थ्यो। अनि झरी थामिएपछि जब दिन सफा हुँदै जान्थ्यो, जब रमाइलो घाम लाग्थ्यो, उसले लामो निःश्वास लिएर आफ्नो चारैतिर हेर्दथ्यो, उसको अनुहारमा प्रसन्नताको क्षीण झलक देखिन्थ्यो। अनि कुनै गम्भीर प्रश्नको समाधान भएजस्तो आनन्दले ऊ मुसुमुसु हाँस्थ्यो। उदासमय प्रकृतिले उदास पारेको उसको हृदय फेरि एकाएक प्रफुल्लित हुन्थ्यो अनि बडो फुर्तीसाथ त्यहाँबाट उठेर अस्वाभाविक चालले घस्रँदै अन्यत्र जान्थ्यो।

कहिले लोयड्ड रोडको छेउमा जुत्ताको पसलअघिल्तिर बसेर मागिरहन्थ्यो। दिनभरि टन्टलापुर घाम लागिरहेको हुन्थ्यो। एक्कासि कालो बादल आई आकाश ढाक्थ्यो र पानी पर्न लाग्थ्यो। हेर्दाहेर्दै घनघोर वर्षा हुन्थ्यो। लङ्गडाले आधा बिँड भाँचिएको, धेरै ठाउँ टालेको थोत्रो छाता उघारेर पसलको आडमा ओत लाग्थ्यो। तर दर्के पानीको बाछिटाले भने उसको जीउ जम्मै भिज्थ्यो। झन् हावा चल्न लागेपछि त उसको साह्रै दयनीय दशा हुन्थ्यो। ऊ जति छाताभित्र एक डल्लो परेर वर्षाको पानीदेखि बाँच्न खोज्थ्यो, हावाले झन् उसको छाता पल्टाउन खोज्थ्यो। दुवै हातले छाता समातेर जोगिँदा-जोगिँदै पनि हावाले उसको छाता ह्वार्रलाङ्ग उँभो फर्काइदिन्थ्यो। लङ्गडा दर्के पानीमा भिज्दै बडो कठिनले छातालाई सोझो पार्न खोज्दथ्यो अनि त्यहाँदेखि अर्को ठाउँ सर्ने बल गर्थ्यो- लङ्गडाको त्यो अवस्था देखेर नजिकैको घडी-पसलमा ओत लाग्ने मानिसहरू हाँस्थे !

रेस्टुराँको झ्यालबाट हेर्ने मानिसहरू पनि लङ्गडालाई हेरेर हाँस्थे। तर लङ्गडा त्यसको वास्तै नगरी पानीमा भिज्दै-भिज्दै अर्कै ठाउँमा जाने कोसिस गर्थ्यो। भरे राति पानी थामिएपछि भिजेकै लुगा लाएर ऊ सुत्थ्यो।

कहिले बिहानदेखि बेलुकीसम्म सिमसिम पानी परिरहन्थ्यो। सडक, गल्ली, छिँडी, घर, दलान, पानीले भिजेर सबै हिलैहिलो भएर दिक्क लाग्दो दृश्य हुन्थ्यो। यस्तो झरी-बादलका दिनमा उसलाई गल्ली-गल्ली घस्रिरहनु साह्रै सिकसिको लाग्थ्यो र घण्टौं एकै ठाउँमा बसिरहन्थ्यो। पान खान आउने युवकहरूलाई उसले राम्ररी हेर्दथ्यो, तिनीहरूको सुकिलो लुगा हेर्दथ्यो। ऊ छाता ओढेर भुइँमा टुक्रुक्क बसिरहेको हुन्थ्यो। भिजेको पृथ्वीदेखि एक किसिमको गन्ध उसको नाकमा आउँथ्यो। उसको मनमा त्यस वेला कस्तो-कस्तो भावना र कल्पना आउँथे। उसले कसैको अनुहारमा हेरिरहेको कुनै अर्कै मानिसले देख्यो भने लङ्गडा ईषत् लाज मान्थ्यो र आँखा अर्कैतिर घुमाउँथ्यो। तर उसले धेरै बेरसम्म छड्के नजरले घरी-घरी फेरि उतैतिर हेरिरहन्थ्यो।

पानी त्यतिकै परिरहेको हुन्थ्यो। कुकुरको जीउ पनि आधा भिजिसकेको हुन्थ्यो र त्यसको जीउ पनि गन्हाउँथ्यो। त्यो पनि लङ्गडाको पिठिउँपट्टि छातामा आश्रय लिएर बसिरहन्थ्यो।

यसरी पानको पसलमा बस्दा-बस्दै रात पर्दै जान्थ्यो। हुस्सु लागेर ६ बजेतिर नै अँध्यारो हुँदै जान्थ्यो। पानको पसलमा अब पान र चुरोट किन्न आउने-जाने धेरै मानिस हुँदैनथे। कुइरो र हुस्सुले सारा सहर नै छोपिसकेको हुन्थ्यो। एक त त्यसरी पानी दिनभरि परेर जताततै हिलो भएर दिक्क लाग्दो हुन्थ्यो। उसमाथि हुस्सु छाएर झन् साँझको अन्धकार छाउँदै आउँदा चारैतिर एक प्रकारको उराठ लाग्ने वातावरण छाउँथ्यो।

लङ्गडा काठको सहाराले घस्रिँदै पसलतिर खानेकुरो मागेर खान्थ्यो र अबेर गरेर आफ्नो झुप्रोमा फर्कन्थ्यो। झुप्रोभित्र पस्नासाथ त्यहाँ एक किसिमको गन्ध आउँथ्यो जसको लङ्गडालाई बानी परिसकेको थियो। पानी परेको बखत उसको झुप्रोमा धेरै ठाउँ पानी चुहिरहन्थ्यो। देब्रेपट्टि अलिकति ओभानो ठाउँ थियो, त्यहीं सुत्ने गर्थ्यो। धेरै बेर उसलाई निद्रा लाग्दैनथ्यो। बाहिरको झरीको एकनाससित आइरहेको आवाजबाहेक अरू केही सुनिँदैनथ्यो।

झरी परिरहेको बेला आधा राततिर उसलाई कहिलेकाहीँ बेसुरो गीत गाउन पनि मन लाग्थ्यो र लाहुरे गीतको भाका हालेर गुनगुनाइरहन्थ्यो। त्यस वेला उसलाई अव्यक्त आनन्द लाग्थ्यो। बाहिरको झरीको आवाज सुन्दा उसलाई ठूलो जङ्गलको माझमा पानीमा रुझ्दै एक्लै उभिरहेको जस्तो लाग्थ्यो, त्यस बेला उसले आफूलाई बिर्सन्थ्यो- आफ्नो माग्ने जीवन, वा कुँजे जीवनको उसलाई सम्झना नै हुँदैनथ्यो। दिनभरि आफूले घस्री-घस्री मागेको सबै उसले बिर्सन्थ्यो। त्यस बेला आफू कुँजे छु, लङ्गडो छु भन्ने उसलाई यादै हुन्नथ्यो।

राति कहिले मेघ गर्जेर कति बज्र गिरेजस्तो आवाज हुन्थ्यो- लङ्गडा डरले जुरुक्क उठेर अन्धकारमा टुक्रुक्क बसिरहन्थ्यो। यो मेघको आवाजले उसलाई सानैदेखि असाध्यै डर लाग्थ्यो ! मेघको आवाजले उसका मनका सुन्दर-सुन्दर भावनाहरूलाई टुक्रा-टुक्रा पारिदिन्थ्यो- उसका कल्पनाहरू छिन्नभिन्न हुन्थे। ऊ एक्कासि भावशून्य हुन्थ्यो र कातर भावले प्वालबाट बाहिरतिर नियालेर हेर्न खोज्थ्यो।

बाहिर चुकजस्तो अन्धकारबाहेक केही देखिँदैनथ्यो- केवल बेला-बेलामा आकाशको यो छेउदेखि ऊ छेउसम्म झिलिक्क-झिलिक्क गरेको उज्यालो मात्र देखिन्थ्यो। प्रकृतिको यो उद्वेग एकान्त संसारमा बसेको त्यो प्राणीलाई कस्तो उजाड र नीरस लाग्थ्यो भने त्यो उसैले मात्र जान्दथ्यो। त्यस वेला भने उसलाई संसारमा एक्लै छु जस्तो लाग्थ्यो। आफ्नो कोही आत्मीय छैन जस्तो लाग्थ्यो। सारा सहरवासीहरू घोर निद्रामा हुन्थे- लङ्गडाचाहिँ जागा रहेर वर्षाकालमा चारैतिर पृथ्वीबाट खोला-नालाहरू बढेर 'स्वाँ' गरेको आवाज सुनिरहन्थ्यो।

मिरमिरे उज्यालो भएसम्म यसरी बसिरहन्थ्यो। उज्यालो हुँदै जाँदा थामिन लागेको झरीको आवाज पनि मधुरो तर एकोहोरो भएर आइरहन्थ्यो। लङ्गडा त्यहाँ धेरै बस्न सक्दैनथ्यो- त्यो वातावरण, त्यो उदासीन प्रकृति र रुझिरहेको पृथ्वीको मर्मर ध्वनिसमेत उसको निम्ति असह्य हुन्थ्यो र उज्यालो हुनासाथ चाँड-चाँडै उठेर त्यहाँबाट घस्रँदै ऊ बजारतिर आउँथ्यो...।

३.

हिउँदमा भने दिन काट्न उसलाई बडो मुस्किल पर्थ्यो। उसको जीउमा प्रशस्त लुगा हुँदैनथ्यो- ओढ्ने-ओछ्याउने लुगा पनि धेरै हुँदैनथे। घाम नलागेको बेला त दिनभरि जाडोले थुरथुर कामी नै रहन्थ्यो। उसका ओठ नीला हुन्थे। हात-खुट्टा कक्रिएर हिउँजस्ता चिसा हुन्थे। उसले आफ्ना सुकिसकेका दुवै पाखुरामाथि माथिसम्म पुग्ने गरी फाटिसकेको पट्टी बेरेर राख्दथ्यो। खुट्टामा फाटिसकेको क्यानभासको जुत्ता लाउँथ्यो। कहिलेकाहीँ माग्नेहरूले आगो बालेर हात सेकाइरहेको देख्यो भने लङ्गडा पनि उहीँ घस्रँदै गएर आगोको छेउमा बसिरहन्थ्यो। मैला, गन्हाउने, च्याथ्रा-च्याथ्रा भइसकेका वस्त्र लाउने अरू माग्नेहरू त्यहाँ झुरुम्म भएर अनेक कुरा गरिरहन्थे तर लङ्गडा भने केही बोल्दैनथ्यो। ऊ चुप लागेर तिनीहरूका कुरा सुनिरहन्थ्यो। आफूलाई तिनीहरूभन्दा धेरै बाठो र धेरै अनुभवी ठान्थ्यो।

बादल हटेर सरक्क घाम लागेपछि मात्र लङ्गडा त्यहाँबाट उठेर बजारतिर जान्थ्यो। तर रात पर्न लागेपछि स्टेसनको नजिक त्यही ओत लाग्ने ठाउँमा आएर कुनापट्टि सुत्ने गर्थ्यो। हिउँदमा दिनले छिटै बिदा लिएर रात आउने हुनाले रातको राज्य लामो हुन्थ्यो। सिरेटोले हानेर त्यो वस्त्रहीन प्राणीको मुटु पनि छेड्थ्यो। हावा ज्यादै चलेको रात त उसलाई निद्रा नै लाग्दैनथ्यो। रातभरि ऊ सुत्दैनथ्यो। टहटह जून लागिरहेको हुन्थ्यो। चारैतिर शून्य हुन्थ्यो। जुनेली रातमा प्रकृतिको रूप ज्यादै उदासमय हुन्थ्यो। चारैतिर शून्य रातमा रुखपातहरू पनि शीतमा नुहाइरहेका जस्ता हुन्थे। शीतमा ल्याफल्यफ्ती भिजेका रुखका पातहरू जूनको टलकमा टल्कन्थे। ठूल-ठूला घर, कोठी, स्कुल, होटेल, पसल र बिल्डिङहरू पनि रातको चकमन्न वातावरणमा चुपचाप उभिरहेका जस्ता देखिन्थे, मानौँ उनीहरू पनि कसैको मृत्युमा शोकमग्न छन्।

जून नभएको रातमा त झन् असङ्ख्य तारे-ताराहरूले आकाश ढाक्दथे। लङ्गडाले ती चम्किरहेका ताराहरू एकोहोरो हेरिरहन्थ्यो- कोही ताराहरू केही बेर चम्केर फेरि एक छिन हराउँथे। फेरि एक छिनपछि उज्यालो भएर एक्कासि चम्कन लाग्थे। त्यो देखेर लङ्गडाको मनमा बालक अवस्थामा कसैले आफूलाई ती नक्षत्रका बारेमा सुनाएका अद्भुत कथाहरूको स्मरण हुन्थ्यो। उसको मनमा के-के कल्पनाहरू आउन लाग्थे !

जति रात बढ्दै जान्थ्यो, त्यहाँ उति शून्यता र गम्भीरता पनि बढ्दै जान्थ्यो। चकमन्न रातमा चिसो हावा बगेर सारा पृथ्वी कक्रिएको भान हुन्थ्यो। प्रकृति पनि मौन बसिरहेको जस्तो लाग्थ्यो। सडकमा बिजुलीहरू धीमा प्रकाशले बलिरहेका हुन्थे। स्टेसनवरपरको वातावरण ज्यादै शून्य र निस्तब्ध हुन्थ्यो। केवल रातको निस्तब्धतामा कताकता कुकुर भुकेको सुनिन्थ्यो।

आफू बसेको ठाउँदेखि आधा रातमा उँधोतिर हेर्दा तल जुबिली सेनिटोरियमका एक-दुई झ्यालहरूमा अझै बत्तीको प्रकाश देखिन्थ्यो। लङ्गडाले चुपचाप ती झ्यालहरूलाई एकोहोरो हेरिरहन्थ्यो। त्यहाँ बस्न आउने धनी मानिसहरूको ऊ कल्पना गर्न लाग्थ्यो। तिनीहरूको आराम र ऐश्वर्य बुझ्ने ऊ चेष्टा गर्थ्यो। उसलाई अझै पनि सम्झना छँदै थियो, एक पल्ट तल जुबिली सेनिटोरियममा बस्न आउने एक जना बङ्गाली परिवार सधैँ रिक्सामा चढेर चौरस्तातिर जान्थ्यो। त्यो परिवारमा एउटी सुन्दरी युवती पनि थिइन्। तिनले लङ्गडालाई भेटेको बखत सधैँ ब्यागबाट एक रुपियाँ झिकेर दिन्थिन्। ती युवती कस्ती सुन्दरी थिइन् !

जुबिली सेनिटोरियमतिर हेर्दा लङ्गडाको मनमा अहिले पनि त्यस कुराको सम्झना हुन्थ्यो। ती युवतीको सुन्दर अनुहारको बारम्बार हृदयमा स्मरण हुन्थ्यो ! यसो हुँदा-हुँदै रात सकिँदै जान्थ्यो र ताराहरू पनि बिस्तार-बिस्तार हराउँदै जान्थे। पृथ्वीमा उषाकालीन वायु बग्नुभन्दा अघि दार्जिलिङ सहर झिसमिसे अन्धकारभित्र नै छोपिएको हुन्थ्यो। तर हिमालको टाकुराहरूमा भने सूर्यको प्रथम किरण पर्नासाथ पर्वतराजले त्यहाँ रमाइलो सुनको मुकुट लाएजस्तो देखिन्थ्यो ! बाटाघाटामा पनि एकाबिहानै हिँड्ने दूधवालाहरू काँधमा दूधको ढुङ्ग्रो लिएर घर-घरमा गइरहेका हुन्थे। धीरधाम मन्दिरमा पूजाको आरम्भ भएपछि त बिहानको नीरवता राम्रै भङ्ग हुन्थ्यो अनि पूजाको घण्टा धेरै बेरसम्म बजिरहन्थ्यो...।

त्यो एकनाससित आइरहेको मन्दिरको घण्टाको स्वरले बिहानको वातावरण साह्रै रमाइलो, साह्रै पवित्र पार्थ्यो। लङ्गडा मिरमिर उज्यालो हुन थालेपछि उठेर एक्लै डल्लो परी बिहानको घाम नपाएसम्म पर्खिरहन्थ्यो। मानिसहरू हिँड्न थालेपछि लङ्गडा पनि त्यहाँबाट घस्रँदै निस्केर मास्तिर गाडी हिँड्ने ठूलो सडकमा आउँथ्यो र फेरि पसलमा रोटी र चिया मागेर खान्थ्यो।

कहिलेकाहीँ तीन-चार दिन घामै लाग्दैनथ्यो। जाडो चम्कन्थ्यो। दिन ढुस्स परेको हुन्थ्यो। हिउँ पर्ला-पर्ला जस्तो हुन्थ्यो। हिउँ पर्न थालेपछि त हिउँले बाटाघाटा, सडक एकदम सेताम्मे हुन्थे। सहरका बदमाश केटाहरू आएर हिउँको डल्लाले लङ्गडालाई खुब हान्थे- हिउँको डल्लाले उसको कुममा, आङमा, टाउकामा लाग्थ्यो। लङ्गडा कराएर तिनीहरूपट्टि फर्केर गाली गर्थ्यो। यो क्रूर क्रीडाले धेरैलाई आनन्द दिए पनि कोही-कोही भावुक मानिस त्यहाँबाट हिँडिरहेका छन् भने लङ्गडाको त्यो दयनीय अवस्थामा टिठ्याएर ती केटाहरूलाई हप्काउँथे।

संसारमा ऊ त एउटा विकृत अङ्ग भएको निर्बल प्राणी न थियो ! यसैले मानव संसारभित्र भए पनि ऊ समाजहीन थियो। लङ्गडाको अवस्थामाथि न कसैले दया गर्थ्यो, न कसैले त्यति गम्भीर विचार गर्थ्यो। सबैले लङ्गडालाई दिनहुँ देख्थे- मानिसहरू सब आफ्नो-आफ्नो चिन्तामा, स्वार्थमा डुबेर हिँडिरहन्थे। उनीहरूलाई आफ्नो संसारबाहेक, आफ्नो दुःखसुखबाहेक अरूको चिन्ता अथवा वास्ता नै हुँदैनथ्यो। स्कुलका विद्यार्थीहरू, अड्डामा जाने किरानिहरू, बजारका पसलेहरू सबै लङ्गडालाई रोजै यता र उता घस्रिरहेको वा सडकको छेउमा बसेर मागिरहेको देख्दथे।

तर कसैलाई त्यस लङ्गडाको वास्तविक अवस्थामाथि विचार गर्ने अवकाश नै थिएन। कहिलेकाहीँ भावुक भएर लङ्गडाले यी कुराहरू विचार गरिरहन्थ्यो। उसको निम्ति दिनहुँ नै त सूर्य उदाउँथे। बेलुकी हिमाल र फालेलुङ डाँडापारि सूर्य अस्त हुन्थे- अनि साँझ पर्दै गएपछि फेरि आकाशभरि ताराहरू चम्किरहन्थे। यसरी रात शेष भएपछि भोलि फेरि सूर्योदय हुन्थ्यो अनि फेरि रात आउँथ्यो। अनि रात सकिएपछि फेरि दिन आउँथ्यो। यस्ता कैयौँ दिन र रातहरू एक-एक गरी लङ्गडाले काटिरहेको थियो। प्रतिदिन पेटको निम्ति माग्नु परे तापनि, दैनिक जीवनको एकनासपनले उसलाई दिक्क लागे पनि संसार एकोहोरो चलिरहेको देख्ता उसलाई कहिले त सपनाजस्तो पनि लाग्थ्यो। उसको स्नेहहीन, सहानुभूतिहीन, नीरस जीवन यसरी बितिरहेको थियो। न त्यो कहिले थामिन्थ्यो, न कहिले त्यसको शेष हुन्थ्यो।

लङ्गडाले वर्षौंदेखि त्यहाँ यसरी जीवन काटिरहेथ्यो। ऊ कहाँबाट आएको थियो, त्यो कसैलाई थाहा थिएन। वर्षौंदेखि मानिसहरूले उसलाई सधैँ त्यतिकै देख्थे। कहिलेकाहीँ कसैले उसको विषयमा सोध्यो भने उसले एउटा कुरा भन्थ्यो, कसैलाई अर्को कुरा भन्थ्यो। साह्रै खोजी गर्ने मानिस भेट्यो भने ऊ बिस्तारै त्यहाँबाट टोलिएर भाग्ने चेष्टा गर्थ्यो कि त दिक्क मानेर छोटकरीमा उत्तर दिन्थ्यो, “हजुर, बरबोटे कमान मेरो घर हो- जन्मै लङ्गडा भएर जन्मेको... पछि दुवै घुँडा राम्ररी सोझो पार्न नसक्ने भएँ... कुँजे भएपछि के गर्नु... हजुर, परमेश्वरले त्यस्तै लेखिदिनुभएछ। मागी-मागी पेट भर्छु...” यति भनेर ऊ त्यहाँ धेरै नबसी कतै जान्थ्यो।

कसै-कसैलाई भने उसले अर्कै कुरा भन्थ्यो। आफूलाई मन परेको बेला सोध्ने मानिसलाई जीवन-कहानी सुनाउँथ्यो। उसले भन्थ्यो, “घर नेपाल हो, हजुर... नेपाल तीन नम्बरमा जग्गा छ, जमिन छ, खान-लाउन राम्रो पुगे नेपाल छोडेर किन मुगलान पस्नु पर्थ्यो? आफू सोह्र वर्षको हुँदा दार्जिलिङ पसेको। तर दिन-दशाले गर्दा पहाड फर्कन सकिनँ, यस्तै हालत भएर आज मागी-मागी पेट भर्दैछु... डुली हिँड्छु एक मुठी सास छउन्जेल, अब हजुरहरूकै आछिपिछामा छु, के गर्नु हजुर !...”

तर आफू कसरी लङ्गडा भयो, आफ्ना अङ्गहरू कसरी विकृत भए, त्यो भने कसैलाई खुलस्त भन्दैनथ्यो। कसैले त्यसका विषयमा सोध्यो भने वा बलजफ्ती भन्न लायो भने लाज मानेजस्तो गर्थ्यो, उसको मुख एकाएक गम्भीर हुन्थ्यो, कालो हुन्थ्यो। अप्रस्तुत भएर भुइँतिर ऊ एकोहोरो हेरिरहन्थ्यो र धेरै बेरपछि टाउको उठाएर झिनो स्वरमा भन्थ्यो, “एक जना मान्छेको घरमा गोठालो भएर बसेको थिएँ... घाँस काट्थेँ। एक दिन पानी-झरीको दिनमा ठूलो पहिरोनेर एउटा रुखमा चढी पात काट्न लाग्दा भननन रिँगटा लागेर खसेँ। मुन्तिर खोलामा पुगेछु ! के गर्नु, मरिहालेको भए त बेसै हुन्थ्यो हजुर, नत्र यो पाप दुनियाँलाई देखाउनुपर्ने थिएन।” यति भनेर ऊ त्यहाँबाट घस्रँदै अर्कै ठाउँ जान्थ्यो।

घामले डढेर उसको अनुहारमा चाँया पनि परिसकेको थियो। उसको हिस्सी परेको अनुहार बिस्तार-बिस्तार उमेर ढल्किँदै जाँदा चाउरी पर्दै गएको देखिन्थ्यो। उसको निधारमा धेरै रेखाहरू देखिन्थे। तिनै रेखाहरूबाट बाँच्नको निम्ति उसले जीवनमा गरेको सङ्घर्षको परिचय पाइन्थ्यो। यसरी धेरै वर्षदेखि मागेर खाने उसको अभ्यास भइसकेको थियो। दार्जिलिङ बजारको यो छेउदेखि ऊ छेउसम्म घस्रँदै हिँड्थ्यो। पहिले-पहिले त उसले लामो लौरोमा पाखुराको बलले झुन्डी एक खुट्टाले टेकेर हुर्रिँदै हिँड्ने गर्थ्यो। अर्को खुट्टाचाहिँ खुम्चिएर झुन्डिरहन्थ्यो। तर पछि-पछि उसको अर्को खुट्टा पनि नचल्ने भयो र दुवै घुँडा खुम्च्याएर हातमा काठ समाती त्यसका बलले घस्रिने गर्दथ्यो।

दाहिने-देब्रे दुवै हातले एक-एकपट्टि काठ समाती त्यसका बलले घस्रँदै हिँड्दा पछिल्तिरबाट ऊ पिङ खेल्दै हिँडिरहेको जस्तो पनि देखिन्थ्यो। यसरी घस्रँदै कहिले स्टेसनसम्म पुग्थ्यो, कहिले तल मोटर-बस उभिने ठाउँमा आएर अघिल्तिर बसिरहन्थ्यो, कहिले सब्जी बेच्ने बजार र कहिले मासुको पसलतिर गएर बसिरहन्थ्यो। कहिले घस्रँदै माथि चौरस्तासम्म पनि ऊ पुग्थ्यो। कहिले क्यापिटल सिनेमाको फाटकको अघिल्तिर भित्तापट्टि बोरा ओछ्याएर माग्न बस्थ्यो। पेटभरि खान पाएको दिन भने ऊ बेपर्वाही भएर यत्रतत्र डुलिहिँड्थ्यो। रात परेपछि कसैको दलानतिर गएर वा पसलको एक कुनामा ओत लागेर वा म्युनिसिपल बिल्डिङमुन्तिर गएर सुत्ने गर्थ्यो।

यसरी डुलिहिँड्दा एक दिन उसले बजारमुन्तिर गड्डीखानको छेउमा एउटा थोत्रो झुपडीजस्तो देख्यो। पहिले-पहिले त सबैको दृष्टिबाट आफूलाई बचाएर राति-राति त्यहाँ आएर सुत्ने गर्थ्यो। बिहान सबेरै उठेर कसैले नदेख्ने गरी त्यहाँबाट हिँडिहाल्थ्यो। कसैले केही आपत्ति नगर्दा पछि-पछि ऊ त्यहीँ निर्विघ्न सुत्न थाल्यो।

कहिले भने लङ्गडाले पेटभरि खान पाउँदैनथ्यो। उसलाई ज्वरो आइरहेको हुन्थ्यो। भोकै तीन-चार दिनसम्म लडिरहन्थ्यो। आफू यसरी भोकै बसेको बेला कुकुरले उसलाई छोडेर जान्थ्यो र गल्लीको नालीतिर मुख गाडी जुठो-मैलाहरू टिपेर खान्थ्यो अनि लङ्गडाको छेउमा मुख चाट्दै आउँथ्यो। लङ्गडालाई त्यस बेला रिस उठ्थ्यो, डाह पनि हुन्थ्यो। भोको पेटको झोँकमा लौरो टिपेर कुकुरलाई हान्न खोजेजस्तो गरेर भन्थ्यो, “काँडा ! मैले खान दिइनँ भने त लपलप गरिहिँड्छस्?”

कुकुर पनि आफ्नो दोष स्वीकार गरेजस्तै गरी कातर भावले पुच्छर हल्लाउँदै लङ्गडाको छेउमा आएर गुँडुल्किन्थ्यो।

लङ्गडा कुकुरको अनुहार एकोहोरो जिज्ञासु भावले हेरिरहन्थ्यो। कुकुर आफ्ना दुवै आँखा झिमझिम गर्दै थुतुनो भुइँमा तेर्स्याएर लङ्गडाको अनुहारमा यसरी हेरिरहन्थ्यो- मानौँ कुकुरले अव्यक्त भावले भनिरहेको हुन्थ्यो, ‘तिमी त मान्छे भयौ साथी ! म कुकुर भएँ। मैले नालीमा मुख गाडेर खानेकुरो खाए पनि तिमीले त त्यसो गर्न सक्दैनौ। हामी दुवैको संसारमा एउटै स्तर भए पनि तिमी मान्छे नै भयौ अनि म त कुकुर नै ठहरिएँ !’

४.

त्यस दिन बिहानै उठेर लङ्गडा घस्रँदै गङ्गीखानको गल्ली उकालो गइरहेथ्यो। कुकुर पनि उसको पछि सुस्त-सुस्त हिँडिरहेथ्यो।

चोकको मैदानमा आइपुगेपछि लङ्गडाले लामो निःश्वास लियो र फेरि उकालो हिँड्न थाल्यो। चौरस्ता आएपछि उसले त्यहाँ केही बेरसम्म बसेर थकाइ मार्‍यो। उसको शरीर पसिनाले भिजेको थियो। त्यसपछि फेरि ऊ महाकाल बाबाको थानतिर बिस्तार-बिस्तार घस्रँदै उकालो जान लाग्यो।

महाकालको थानतिर जाने सडकमा धेरै माग्नेहरू पहिले नै आएर सडकको छेउ-छेउमा जाडोले काम्दै बसिरहेका रहेछन्।

सबै माग्नेहरूभन्दा माथि गएर लङ्गडाले सडकको छेउमा बोरा ओछ्यायो र त्यहीँ बस्यो। आफ्नो कुम्लो र लौरो पनि उसले देब्रेपट्टि राख्यो अनि अघिल्तिर उसले सानो रुमाल फिँजायो।

महाकाल बाबाको दर्शन गर्न जाने मानिसहरू आइरहेका थिए।

बिहानको चिसो हावा बगिरहेको थियो। रुख, पात, झार, जङ्गलमा तुसारो परेको थियो। कञ्चनजङ्घा हिमाल परिष्कृत चाँदीजस्तो आज टल्किरहेको थियो।

लङ्गडाको जीउको पसिना सुकेपछि उसलाई जाडो लाग्न थाल्यो। हिँड्ने मानिसहरू लङ्गडाले ओछ्याएको रुमालमा एक-दुई पैसा हालेर जान्थे। लङ्गडा केही नभनी उनीहरूका मुखमा टिठलाग्दो आँखाले टुलुटुलु मात्र हेरिरहन्थ्यो। लङ्गडाले यसरी हेर्दा पैसा नदिई जाने मानिसहरूका मनमा पनि एक प्रकारको दया आउँथ्यो र फर्केर एक-दुई पैसा दिएर जान्थे।

आधा दिनसम्म लङ्गडा यहीँ बसिरह्यो। अब महाकाल बाबाको दर्शन गर्न आउने मानिसहरू पनि थोरै हुँदै गए।

लङ्गडा एक-दुई सातादेखि दुई-चार पैसा गर्दै जम्मा गर्न लागेको थियो- आज उसले रुमालको पोको झिक्यो र ऊ पैसा गन्न थाल्यो। आफूलाई एक पेट मोजले खाने पैसा जम्मा भएको देखेर ऊ खुसी भयो। त्यो पैसा उसले त्यही फाटेको रुमालमा राम्ररी बाँध्यो, सन्तोषको लामो सास तान्यो र प्रसन्न चित्तले चारैतिर हेर्‍यो। उसको जीउमा एक प्रकारको स्फूर्ति र आनन्द सञ्चार भइरहेथ्यो।

उसले आफ्नो छेउमा घाम ताप्दै सुतिरहेको कुकुरलाई लौरोले त्यसको थुतुनो हल्लाएर उठायो। लङ्गडा उठेर जान तर्खर गरेको देखेर कुकुर पनि उठ्यो र अन्यमनस्क भावले हाई गर्दै लङ्गडाको अनुहारमा हेरिरह्यो। लङ्गडाको चित्त भने बडो प्रसन्न थियो। उसको जीउमा स्फूर्ति आइरहेको थियो। उसले मनमनै विचार गर्न थाल्यो- 'आज त पुरी-मिठाईको पसलमा गएर मोजले पुरी, तरकारी खान्छु, रसगोला, पेडा खान्छु, सन्देश, जलेबी पनि खान्छु। घिउको पुरी, मिठाई र सेल खाने कति दिनदेखि इच्छा थियो ! ओहो ! सधैँ त मिठाईको पसलमा घिउ र पुरीको गन्ध मात्र सुँघ्दै डुलिहिँड्थेँ ! आज त मनले खोजेका कुरा पेटभरि खान पाउँछु।'

विधातालाई सम्झेर लङ्गडाले एक चोटि पुलुक्क शून्य आकाशतिर हेर्‍यो।

लङ्गडाले कुकुरलाई पनि सम्झ्यो। त्यस कुकुरतिर पनि फर्केर अलि दबेको स्वरमा निहुरिएर भन्यो- "हेर काले ! (उसले कुकुरको नाउँ काले राखेको थियो) तँ पनि सधैँ त गल्लीको नालीतिर गएर जुठा कुराहरू खाई हिँड्थिस्। हेर, आज म पनि पेटभरि खानेछु, तँलाई पनि मनग्गे खुवाउनेछु। तँलाई पुरी-मिठाई मन पर्दैन भने दही, मासु र भातै किनेर पेटभरि दिउँला। काले ! कुकुरको जुनी लिए पनि तँ त बडो भाग्यमानी रहेछस्- म जस्तो लङ्गडा साथीलाई पाएर एक बारको जुनीमा मोज लुटिस् ! लौ हिँड्, काले अब...।"

कुकुरले पनि लङ्गडाको भाषा बुझेजस्तो गरी उसको मुखमा हेर्दै पुच्छर हल्लायो ! लङ्गडाले त्यसलाई एक छिन सुम्सुम्यायो र हाँस्तै-हाँस्तै आफ्नो कुम्लो पिठिउँमा बाँधेर ओरालो घस्रँदै हिँड्यो। बजारमा आइपुगेपछि एउटा होटेलको अघि गयो र मासु-भात किनेर टपरीमा पोको पारी रुमालमा बाँध्यो। त्यसपछि लङ्गडा पुरी-मिठाईको पसलतिर लाग्यो। मिठाईको पसलअघिल्तिर पुगेर लङ्गडाले आफ्नो कुम्लो राख्यो र भुइँमा कुकुरलाई एक टपरी मासु-भात खान दियो। आफूले चाहिँ पुरी, तरकारी, जलेबी, निम्की, पेडा, सन्देश- आफूलाई जे-जे खान मन लागेको थियो, किनेर खान थाल्यो।

कहिले हलुवा मागेर खान्थ्यो, कहिले बुनिया। कहिले पुरी मागेर खान्थ्यो, कहिले सन्देश। खान मन लागेका सबै थोक आज लङ्गडाले किनी-किनी खान थाल्यो। आज जीवनमा उसले पहिलो पटक यसरी उपभोग गरिरहेथ्यो- जीवनमा आजै आफूले पैसा दिएर बडो गर्वका साथ खाइरहेथ्यो। सधैँ त निन्याउरो अनुहार लाएर घण्टौँ कुरिरहँदा पनि कसैले उसलाई एउटा रोटीको टुक्रासम्म दिँदैनथ्यो। सधैँ पसलको अघिल्तिर बसेर घण्टौँ मागिरहँदा एउटा पुरीसम्म ऊ पाउँदैनथ्यो तर आज लङ्गडाले कसैसित भिक्षाको निम्ति मुख बाएन, कसैलाई हात पसारेर, सलाम गरेर, 'मालिक', 'प्रभु', 'हजुर' भनेर दाँत ङिच्याउनु परेन। आज स्वतन्त्र भएर ऊ आनन्दले खाइरहेथ्यो। उसका आँखामा आज असीम आनन्दका रेखाहरू झल्किरहेका थिए। प्रसन्नताले उसको अनुहार आज धपक्क बलिरहेको थियो।

पसलमा आउने-जाने धेरै मानिस थिए। आज लङ्गडाले यसरी आफ्नै पैसा निकालेर खाइरहेको देखेर धेरै मानिसले कौतुकको दृष्टिले पनि लङ्गडातिर हेर्दथे। यो बुझेर लङ्गडाले अझ बाहिरबाट सबै मानिसले सुन्ने गरी दुई-चारवटा रसगोला र पन्तुवा माग्थ्यो र आफ्नो रुमालबाट पैसा झिकेर फ्याँकिदिन्थ्यो। आफूले किनेर स्वतन्त्रतापूर्वक खानमा कति आनन्द रहेछ, आजै जीवनमा प्रथमोप्रथम लङ्गडाले अनुभव गऱ्यो !

कुकुर टपरीको मासु र भात खाइसकेपछि मुख चाट्दै लङ्गडाको अनुहारमा हेर्न थाल्यो। लङ्गडाले एउटा सेल टिपेर कुकुरको अघिल्तिर फालिदिएर भन्यो, 'खा ! अरू के खान्छस् काले?... मेरो जीउ छउन्जेल मोज गर...!'

सधैँ घण्टौँ पसलको अघिल्तिर सलाम गर्दै मागी-मागी खाने लङ्गडाको आज यस्तो रवाफ र फुर्ती देखेर मानिसहरूको मनमा आश्चर्य लागिरहेथ्यो।

आज लङ्गडालाई आफ्ना बिग्रेका अङ्गहरूको वास्ता छैन ! मानिसहरूले आफ्नो अवस्थामाथि उपहास गर्लान् भन्ने उसलाई सम्झना पनि छैन किनभने कसैको अगाडि आज लङ्गडाले 'हजुर, एक पैसा' भनेर टिठलाग्दो आँखाले हेर्दै दाताको अघि हात पसारेको थिएन। आफ्नै संसारमा लङ्गडा स्वतन्त्र थियो।

लङ्गडाले यसरी पेटभरि खाइसकेपछि मुख पुछ्दै आफ्नो पोको काँधमा भिऱ्यो। ऊसित अझै एक-दुई रुपियाँ जति उब्रेको थियो, त्यसलाई चाहिँ रुमालमा बाँधी पोल्टाभित्र घुसाऱ्यो। यति गरेपछि ऊ दुवै काठको भरमा बडो फुर्तीसाथ घस्रँदै त्यहाँबाट हिँड्यो।

लङ्गडा खुसीले घस्रँदै चोकको फाँटमा यता र उता डुलिहिँड्यो। आज ऊ कतै माग्न गएन। आज उसको मन बडो हलुङ्गो थियो। आज उसको चित्ताकाशमा कुनै प्रकारको चिन्ता, भय, शङ्का वा निराशा थिएन। आज असल अङ्ग हुने संसारका अरू सर्वसाधारण मानिसजस्तै आफूलाई पनि ऊ ठानिरहेको थियो।

दिनभरि रमाइलो घाम लागिरह्यो ! लङ्गडा बेलुकी जितेन-झोडामाथि बस्ने हावाघरनेर बसिरह्यो। त्यहाँ सिमेन्टका खाँबाहरू थिए, त्यहाँ खयर र पानको चुना पुछेको दाग, पान खाएर थुकेको दाग, कोइलाले यत्रतत्र कोरिराखेका अश्लील चित्रहरूका रेखाङ्कन पनि थिए; त्यहीँ अढेस लागेर टाढातिर ऊ हेर्न लागेको थियो। कुकुर पनि उसैको छेउमा गुँडुल्किएर निर्विघ्न सुतिरह्यो।

दिन ढल्किइसकेको थियो। बिहानको रमाइलो सूर्यका किरण अहिले फेरि अस्त हुन लागेको हिमालका टाकुराहरूमा देखिए। ती सुनौला किरणले हिमालका टुप्पाहरू स्पर्श गर्दा त्यहाँ साह्रै राम्रो चित्रमय दृश्य देखिन्थ्यो। चारैतिर अन्धकार छाएर आइसकेको थियो, बेलुकीको हावा बग्न लागेको थियो। चाँदमारीका घरहरू अस्पष्ट देखिन लागे।

आज प्रकृतिको सुन्दर तर उदासमय दृश्य हेर्दै लङ्गडा भावुक भएर साँझसम्म त्यहीँ बसिरह्यो। आज उसको मनमा अतीतका धेरै घटनाहरू स्मरण भए। आज आफ्नो बाल्यकालको सुमधुर स्मृतिले उसलाई बडो उदास र भावुक बनायो। उसलाई आफ्नो बाल्यकालको जीवन झल्याँस्स स्मरण भयो। त्यो बेलाको जीवन सम्झँदा र अहिलेको जीवन सम्झँदा उसलाई सपनाजस्तै लाग्यो। उसले सुन्दर ठानेको संसारमा रहेर पनि आज ऊ समाजदेखि धेरै पर, माग्ने-भिखारीको एकान्त संसारमा आफूलाई एक्लै बसिरहेको पायो।

रात परेपछि लङ्गडा त्यहाँबाट उठ्यो। माथि चोकमा आइपुग्दा चारैतिर बिजुली बलिसकेको थियो। लङ्गडा निकै बेरसम्म एउटा बिजुली-बत्तीको छायामुनि बसिरह्यो। आज उसलाई आफ्नो झुप्रोमा जाने इच्छा पनि भएन। रात निकै बित्न लागेपछि म्युनिसिपल बिल्डिङको सिँढी उकालो घस्रँदै चढ्न लाग्यो। माथि आएर एउटा कुनामा बोरा ओछ्यायो। कुम्लो

सिरानी बनायो। फेरि डल्लो परेर त्यहीँ सुत्यो। फाटिसकेको मैलो पाखी थियो, त्यसैले मुख पनि ढाक्यो। उसैको गोडानेर कुकुर पनि गुँडुल्किएर सुत्यो।

लङ्गडा चाँडै निदायो। उसले सपनामा आफ्नो कुकुरलाई देख्यो- कुकुर त एउटा मैलो ढ्वाङ्गनिर सुतिरहेको रहेछ। लङ्गडाचाहिँ वर सडकको एक कुनामा मन्दिरको भित्तापट्टि सियाँलमा बसिरहेको थियो। देख्दा-देख्दै एउटा गिद्ध आकाशबाट ओर्लेर आयो र गिद्धले कुकुरको मासु लुछ्न लाग्यो, कुकुर करायो। गिद्ध उडेर गयो। कुकुर मरेन, बाँच्यो। फेरि अर्को गिद्ध झम्टेर आई लङ्गडाको जीउमा बस्यो र उसको निधारमा ठुँग्न लाग्यो। लङ्गडा करायो। अरू धेरै गिद्धहरू पनि आए अनि लङ्गडाको मासु लुछाचुँड गर्न लागे। लङ्गडाले हेर्दा-हेर्दै उसको जीउको मासु गिद्धले खाइसकेको देख्यो- तैपनि लङ्गडा उठ्ने कोसिस गरिरहेथ्यो। एक छिनमा कुकुर आयो। गिद्धहरू भागे। गिद्धले लुछिसकेको आफ्नो हाड मात्र भएको शरीरलाई मन्दिरको नालीमा लडिरहेको लङ्गडाले देख्यो- कुकुरचाहिँ त्यसैको छेउमा अझै बसिरहेको थियो !

लङ्गडा सपनाबाट झस्केर ब्युँझ्यो।

उसले कस्तो सपना देख्यो ! उसलाई आश्चर्य लाग्यो- उसले विचार गर्‍यो। तन्द्राबाट बिस्तारै उठेर ऊ टुक्रुक्क बस्यो। आफ्नो जीउ छाम्यो। कुकुरलाई पनि उसले छाम्यो। शीतले उसको जीउको लुगा भिजिसकेको रहेछ। चारैतिर शून्य थियो। टाढा गिर्जाको घण्टाले दुई हानेको सुनियो।

रातको निस्तब्ध प्रहारमा घण्टाको यो सानो ध्वनि समेत लम्मिएर कति टाढा पुग्दछ ! अनि सुन्नेको मनमा पनि अहिले त्यो गिर्जाको त्यो “ट्वाङ्-ट्वाङ्” ध्वनि रातको शून्य वातावरणमा झन्-झन् स्पष्ट भएर बजिरहेको सुनिन्छ तर छिट्टै रातको पातलो हावामा मिसिएर त्यो ध्वनि लहरिँदै उतै फेरि गएजस्तो पनि लाग्दछ…।

लङ्गडालाई पनि अहिले त्यस्तै लाग्यो।

धेरै बेरपछि लङ्गडा अलि परतिर सरेर फेरि सुत्यो।

५.

भोलिपल्ट बिहान लङ्गडाको निद्रा ढिलो टुट्यो। उसले आँखा उघार्दा दिन चढिसकेको रहेछ। रेलिङको छाया सरेर पर पुगिसकेको रहेछ। उसले शून्य भावले यता र उता हेऱ्यो। उसका लुगाहरू छरिएका रहेछन्। केही बेरसम्म लङ्गडा तन्द्रा अवस्थामा त्यतिकै बसिरह्यो। पकेटबाट बिडी झिकेर अन्यमनस्क भावले सल्कायो र झोक्रिरह्यो। तर कुकुरलाई नदेख्ता ऊ एक्कासि झसङ्ग भयो। उसले यता र उता आँखा घुमाएर हेऱ्यो। अब त्यहाँ धेरै मानिसहरू हिँड्न लागेका रहेछन्। उसले त्यहाँबाट उठेर कतै जाने विचार गऱ्यो तर आफ्नो पोल्टाका लुगाहरू छरिएर यता र उता भएको देख्ता ऊ जिल्ल पऱ्यो। उसलाई अब राम्रो होस आयो। हिजो आफूले बाँधेर राखेको पैसाको उसलाई सम्झना भयो। उसले हत्तपत्त पोल्टो छाम्यो।

तर पोल्टाको लुगा र रुमाल पनि हराएछन्। राति सुत्ने बेलामा त्यो रुमाल पोल्टामा घुसारेर राखेको उसलाई राम्ररी सम्झना छँदै थियो...।

उसले यत्रतत्र छरिएका लुगा बटुलेर, आफ्नो सबै जीउ छामेर राम्ररी हेऱ्यो, खोज्यो, बोरा टक्टकायो तर पैसा बाँधेको रुमाल भने राम्रै हराएछ !

लङ्गडा छक्क परेर त्यहाँ बसिरह्यो। दुःस्वप्नबाट एक्कासि ब्युँझेको जस्तै उसको अनुहारको भाव शून्य तर विकृत थियो। कुकुरलाई पनि नदेख्ता तथा आफ्नो पैसासमेत नपाउँदा उसको हृदय आश्चर्य, दुःख र क्षोभले परिपूर्ण भएको थियो। बाटा हिँड्ने मानिसका अनुहारमा जिज्ञासाको दृष्टिले ऊ पुलुक्क-पुलुक्क हेर्दथ्यो तर आफ्नो कुकुर र पैसाको विषयमा उसलाई सोध्ने न साहस हुन्थ्यो, न सोध्ने उसको अधिकार नै थियो। आफ्नो आश्चर्य, दुःख र ग्लानि आफूसितै दबाएर राख्नु पर्दा लङ्गडालाई अझै असह्य भइरहेथ्यो। सहरका दुष्ट केटाहरू लङ्गडाको शत्रु थिए- उनीहरूकै काम होला भन्ने उसलाई शङ्का भयो। संसारले आफूमाथि यस्तो अत्याचार गरेको सम्झँदा, संसारले आफूमाथि यस्तो दुर्व्यवहार गरेको देख्ता तथा आफूलाई उपहासको पात्र बनाएर कुव्यवहार गरेको बुझ्दा मानिसप्रति उसको हृदयमा एउटा तीव्र घृणा उत्पन्न भयो। एउटा भयानक हिंसाको तथा प्रतिशोधको लप्का उसको अन्तरदेखि निस्केर स्वर्गसम्म पुग्यो।

तर के लाग्थ्यो र ! ऊ बिचरा निःसहाय थियो। ऊ अङ्गहीन थियो, एउटा निर्बल मानव थियो। उसको अन्तरमा जत्तिकै प्रतिशोधको ज्वाला दन्किरहे पनि, उसको व्यथित आत्मामा जत्तिकै प्रतिहिंसाको हुरी आए पनि त्यो निःसहाय लङ्गडाले आज मनुष्य समाजको त्यो अवहेलना, त्यो अत्याचार र त्यो अमानुषिकता मूक भएर सहन गर्नुपर्दथ्यो।

उसले दुःखको निःश्वास लिएर आफ्नो चारैतिर हेऱ्यो। माथिको अग्लो टाउन हलको घडीमा उसको आँखा पुग्यो- नौ बजिसकेको रहेछ। उसले हत्तपत्त लुगाहरू पोको पारेर बाँध्यो र आफ्नो लौरो काखीमा च्यापी सिँढी ओरालो झर्न थाल्यो।

त्यसै बखत स्कुल जान लागेका ठिटाहरूको एउटा दल मोडमा आइपुगेको थियो। लङ्गडालाई देख्नासाथ उनीहरू एक स्वरले 'भुइँभालु !' भनेर कराए। लङ्गडा नसुन्यैँजस्तो गरेर हतार-हतार सिमेन्टको सिँढीबाट ओर्ली देब्रे गल्लीमा चाँडचाँडै हात-खुट्टाले घस्रँदै भाग्न थाल्यो। निकै पर पुगेपछि उसले फर्केर हेऱ्यो- ती शत्रुहरू उसका दृष्टिबाट ओझेल भइसकेका रहेछन्। लङ्गडाले लामो निष्कृतिको निःश्वास लियो। त्यसपछि लङ्गडालाई एक छिनसम्म कता जाऊँ, के गरूँ भन्ने विचार भयो। उसलाई आफ्नो कुकुरको सम्झना भयो। उसलाई साह्रै शून्य र एक्लो लागिरह्यो। ऊ चारैतिर हेरेर कुकुर खोज्न हिँड्यो। यताउता कुकुरलाई उसले खोज्यो। तर कतै कुकुरलाई देखेन।

लङ्गडा गाडी हिँड्ने मूल सडकमा पुगिसकेको थियो। पानको पसलनेरको छिँडीतिर उसले हेऱ्यो, त्यहाँ पनि उसले आफ्नो चिरसाथी कुकुरलाई देखेन। एक छिनपछि ऊ तल मासुको पसलनेर आयो। साग-सब्जी बेच्ने बजारभित्र पनि घस्रँदै पस्यो तर उसले कतै कुकुरलाई देखेन। एउटा बिजुलीको खम्बानेर ऊ माग्न बस्यो तर उसको मनमा भने बारम्बार कुकुरकै सम्झना आइरह्यो। ऊ त्यहाँबाट पनि उठेर फेरि चोकमुनि गड्डीखानको गल्लीमा गयो। आफू सुत्ने झुप्रोमा पनि गएर हेऱ्यो- तर कतै उसले कुकुरलाई देखेन। गल्लीमा अरू अनेक कुकुरहरूलाई उसले देख्यो। तर त्यहाँ आफ्नो कुकुर नदेख्ता उसलाई झन् नराम्रो लाग्न थाल्यो। उसले ती कुकुरहरूलाई धेरै बेरसम्म एकटक लाएर हेरिरह्यो। तिनीहरूलाई देख्ता आफ्नो कुकुरको विषयमा सोध्ने मन भयो- तर उसले कसरी सोध्न सक्थ्यो र? न कुकुरको भाषा उसले जानेको थियो, न त उसको भाषा नै ती मूक पशुहरू बुझ्न सक्थे !

आज यसरी कुकुर हराउँदा लङ्गडालाई साह्रै नरमाइलो लागिरहेथ्यो। आफ्नो आजन्मको कुनै बन्धुलाई वा कुनै प्रेमिकालाई गुमाएजस्तो लागिरह्यो। संसारमा उसको अरू कुनै आत्मीय थिएन। कुनै बन्धु-बान्धव थिएनन्। आफ्नो अन्तरमा रहेको सबै माया उसले त्यो कुकुरलाई नै दिइसकेको थियो- आफ्नो अन्तरको एकान्त स्नेह र आत्मीयता उसले त्यही मूक पशुमाथि पोखिसकेको थियो। त्यसैले उसको एकान्त हृदयमा कुकुरको निम्ति त्यत्रो ठूलो माया थियो।

लङ्गडा दिनभरि बजारको उँधो र उँभो डुलिरह्यो। सबै गल्लीहरू उसले चाहाऱ्यो- परन्तु आफ्नो साथीलाई कहीँ पनि उसले पाएन। कहीँ पनि उसले देखेन।

यसो हुँदा-हुँदै सूर्य डुब्न लागे। पश्चिम आकाश मेघका टुक्राहरूले ढाकेको भए पनि सूर्यका लामा-लामा किरणहरू छिरेर अग्ला-अग्ला पहाडहरूतिर स्पर्श गरिरहेका थिए। हिमालको आधा छाती बादलले छोपेको भए तापनि मास्तिर शिरमा धेरै बेरसम्म सुनौलो जलप लागी नै रह्यो। त्यो जलप साँझसम्म रहेर बिस्तार-बिस्तार हराउँदै गएको देखिन्थ्यो। रातले पृथ्वीलाई पनि बिस्तार-बिस्तार ढाक्दै लग्यो। जति रात पर्दै गयो, लङ्गडाको मन उति उदास र गम्भीर हुँदै गयो। चारैतिर बिजुली बले। लङ्गडा यता र उता हेरिरह्यो। कतै कालो छाया देख्यो भने पनि उसले त्यहाँ आफ्नै कुकुरको आकारजस्तो देख्दथ्यो र त्यहाँ ऊ घस्रँदै जान्थ्यो तर शून्य छाया मात्र देख्ता ऊ निराश हुन्थ्यो। लङ्गडा धेरै बेर चोकको अघिल्तिर आएर बसिरह्यो। भरे आफू हिजो राति जहाँ सुतेको थियो, उहीँ गएर सुत्ने विचार गऱ्यो। तर जाँदा-जाँदै उसको मनमा अर्कै विचार आयो। ऊ फर्क्यो। अन्त्यमा घस्रँदै-घस्रँदै गड्डीखानमुनि जुन झुप्रोमा ऊ सुत्ने गर्थ्यो, त्यहीँ गएर सुत्यो।

उसलाई धेरै बेरसम्म निद्रा परेन। उसका मनमा धेरै कुराहरू खेलिरहे। बाहिर हावा चलिरहेको थियो। आज झोपडीमा एक्लै सुत्दा उसलाई साह्रै शून्य लाग्यो। उसलाई यो निर्जन झोपडीको वातावरणले उराठ लागेर आयो। यसो हुँदा-हुँदै आधा रात पनि भयो। तर लङ्गडाको आँखामा निद्रा छैन। उसले हाई गर्न खोज्यो। बिडी सल्काएर आफूलाई टोलाउन पनि खोज्यो तर टाढादेखि शून्य रातमा कुकुरहरू एकोहोरो भुकेको धीमा आवाज हावासित बगेर आउँदथ्यो- त्यसैले उसको तन्द्रा झन् भङ्ग हुन्थ्यो।

रात धेरै बितेपछि लङ्गडालाई एक छिन निद्रा पऱ्यो। सपनामा उसले देख्यो- आफू सुकिलो लुगा लाएर धीरधामको पूजामा जान लागेको रहेछ। धीरधामको फाटकनेर पुग्दा उसले देख्यो- आफ्नो कुकुरलाई त कसैले फलामको साङ्लोले एउटा बिजुलीको खाँबामा बाँधेर राखेको रहेछ। लङ्गडालाई देख्नासाथ त्यो कुकुर ज्यादै रमायो, उफ्रयो। लङ्गडा पनि खुसी भएर मानिसको आँखा छली आफ्नो कुकुरलाई बन्धनबाट मुक्त गरायो र धीरधाम मन्दिरतिर जान लागेका मानिसको भीडबाट जोगाएर आफ्नो कुकुर साथमा लिएर ऊ फेरि बजारतिर आयो।

६.

मिरमिर उज्यालो हुनासाथ लङ्गडाका आँखा उघ्रे। चारैतिर मान्छे ठिम्याउन नसक्नेजस्तो झिसमिसे उज्यालो छाइरहेको थियो। चारैतिर शून्य र चकमन्न थियो। रातभरि चलिरहेको हुरी पनि थामिइसकेको थियो। पृथ्वी नै रातिको हुरीले उजाड पारेर गएजस्तो अहिले त्यहाँ यस्तो नीरवता झुन्डिरहेको थियो। लङ्गडा आफ्नो झुप्रोको एक कुनामा जाडोले एक डल्लो परी सर्पजस्तो गुँडुल्किएर सुतिरहेको थियो। ढोकामा आग्लो लाएको थियो, तापनि प्वालहरूबाट उषाकालीन प्रकाश त्यो उराठ लाग्ने झुप्रोभित्र छिरिरहेको थियो। पाखीले घुर्लुम्म सबै मुख छोपेर लङ्गडा सुतिरहेको थियो। उसलाई त्यो एकान्तमा, त्यो निर्जन ठाउँमा सुतिरहँदा यस्तो लाग्दथ्यो, पृथ्वीमा शरीरधारी प्राणी अहिले ऊ मात्रै जीवित छ।

बिहानसम्म त सपनामा ऊ कुकुरसितै खेलिरहेको थियो। कुकुरसितै डुलिरहेको थियो। अहिले आफू ब्युँझँदा पनि उसले कुकुरलाई आफ्नै छेउमा सुतिरहेको सम्झिरह्यो। तन्द्रामा ऊ टोलिइरहेको थियो। हठात् झसङ्ग भएर उसले पाखी पल्टाएर मुख उघार्‍यो- कुकुर रहेनछ। झुप्रो चारैतिर हेर्‍यो, मुन्टो तन्काएर कुनातिर पनि हेर्‍यो- कुकुर कहीँ रहेनछ। ऊ एक छिन जिल्ल परिरह्यो। अनि बिस्तारै उसलाई राम्रै सम्झना हुँदै गयो, कुकुर त दुई दिनदेखि हराएको थियो।

उसलाई कुकुरको सम्झना भयो। कुकुरको तातो शरीरले उसलाई छोइरहेको जस्तो लाग्यो- कुकुरको आङ र थुतुनो गन्हाइरहेको जस्तो लाग्यो। उसले आँखा चिम्लेर कुकुर सम्झिरह्यो- कहिले त्यो गुँडुल्किएर आफ्नो छेउमा सुतिरहन्छ... कहिले खुसीले पुच्छर हल्लाउँदै आफ्नो जीउमा टेकेर माथि घुँडासम्म थुतुनाले चाट्न-चाट्न पुग्छ, कहिले लुखुर-लुखुर गल्लीको ओरालो-उकालो गरिरहन्छ, कहिले नालीतिर जुठो हड्डीका टुक्राहरू खाइरहेको हुन्छ, कहिले जोतेको दलानमा गएर सुतिरहेको हुन्छ, कहिले चोकको वरपर हिँडिरहेको हुन्छ, कहिले धनबहादुरको आँगनमा गएर घाम तापिरहन्छ, कहिले वर्षाको मुसलधारे पानीमा निथ्रुक्क भिजेर गड्डीखानको ओरालो छिँडीमा गइरहेको हुन्छ, कहिले स्टेसनको छेउमा खलासीहरूले त्यसलाई जिस्काइरहेका हुन्छन्, कहिले आफ्नै छेउमा त्यो बसिरहेको हुन्छ, यस्तै अनेक कल्पित चित्रहरू आँखामा ल्याउँदै लङ्गडा निकै बेरसम्म सुतिरह्यो।

बाहिरको प्रकाश झुप्रोभित्र छिर्न खोजिरहेको थियो। झुप्रोभित्रको धमिलो उज्यालोमा लङ्गडाले आफ्ना वरिपरिका वस्तुहरू देख्यो- आफ्नो लौरो थियो, भित्ताको कुनापट्टि च्यातिएर भइसकेका अस्कट र कमिज थिए। मैलिएर कालै भइसकेको पटुका पनि थियो, एक-दुईवटा टिनका बट्टाहरू पनि थिए, घुलैघुलोले ढाकिएको भुइँ थियो। आधा च्यातिएको एउटा अखबारको टुक्रा पनि भुइँमा थियो, वरिपरि बिडी र सलाईका टुक्राहरू छरिएका थिए, काठको आग्लो अनि चारैतिर टिनले बारेको एउटा छाप्रो थियो अनि मास्तिर उही टिनको छानो- ती वस्तुहरू त प्राणहीन थिए, तापनि लङ्गडा तीसित चिरपरिचित थियो, मानौँ तिनीहरूका दुःख-सुख लङ्गडाले बुझ्न सक्थ्यो अनि तिनीहरूले पनि लङ्गडाको दुःख-सुख बुझ्न सक्दथे। लङ्गडाको निम्ति तिनै वस्तुहरू एउटा परिवारजस्तो भइसकेका थिए।

तर आज ती सबै वस्तु लङ्गडालाई निर्जीव, चिसो र प्राणहीन लागे। तीसित न आफूले केही कुरा गर्न सक्थ्यो, न ती वस्तुहरूसित आज आफ्नो आत्मीय सम्बन्ध छ जस्तो लाग्यो। आज यही निर्जनतामा यिनै प्राणहीन वस्तुहरूको माझमा उसले आफूलाई पनि एक्लै अर्ध-मनुष्यको रूपमा सुतिरहेको पायो ! आज उसलाई राम्रै थाहा भयो- संसारमा अहिले उसको कोही परिवार रहेनछ, कोही आत्मीय रहेनछ, कोही समाज रहेनछ। चारैतिर उसको निम्ति शून्यता, नीरसता मात्र रहेछन्। आज उसलाई असाध्यै नरमाइलो लाग्यो। आज झुप्रोको यो नीरवताले उसलाई झन् अधीर बनायो।

लङ्गडा उठेर टुक्रुक्क बस्यो। उसले आफ्नो जीउ पाखीले बेरेको थियो। तैपनि जाडोले ऊ कामी नै रहेथ्यो। उसका आँखालाई गम्भीर नैराश्यले ढाकिसकेको थियो। उसको दृष्टि देब्रेतिरको भित्तामा टाँसिएको थियो। एकोहोरो हेरिरहँदा त्यहाँ कुकुरको चित्र देखियो, फेरि मान्छेको टाउकोजस्तो चित्र पनि देखियो, कहिले धेरै कुकुर मैदानमा एक साथ निस्केको जस्तो देखियो, कहिले भैँसीजस्तो पनि देखियो। यसो हुँदा-हुँदै त्यहाँ धेरै गिद्धको चित्र देखियो... अनि लङ्गडा झस्क्यो। उसलाई अस्तिको सपनाको झल्याँस्स सम्झना भयो। त्यो सपनाको सम्झनाले उसलाई दिक्क लाग्यो। त्यो सपना उसले आफ्नो सम्झनाको पाटीदेखि मेट्न खोज्यो, त्यो सम्झनालाई पन्छाउने चेष्टा गर्‍यो। तर सम्झना पुछिएन। झन्-झन् त्यो सम्झना वर-वर हुँदै आयो। आफ्नो चारैतिर गिद्धहरू उडिरहे जस्तो उसलाई लाग्यो। कुकुर पनि रगतले मुछिएर बसिरहेको जस्तो लाग्यो। उसका आँखा तिरमिरी भइरहे। कुकुरलाई गिद्धले ठुँगिरहेको उसले धेरै बेर सम्झन सकेन। कुकुरको उसलाई साह्रै माया लाग्न थाल्यो। उसका आँखामा आँसु आउन थाल्यो। उसले बलजफ्ती आँखा चिम्म गर्‍यो। पट्टी बाँध्यो। तैपनि कुकुरको सम्झना मनबाट हटेन। ऊ चिच्याउन खोज्यो। उसले भुइँमा थुक्यो।

यसरी उसले कुकुरको बारेमा कल्पना गर्दा-गर्दै कुकुर त्यही छेउको नालीमा डुलिरहेको जस्तो पनि लाग्यो। उसले आग्लो अलिकति उघार्‍यो र बाहिर नियालेर हेर्‍यो। तर गल्ली शून्य थियो। त्यहाँ कोही मानिस पनि अझै उठेको रहेनछ। शीत र तुसारोले घरका छानो, रुख-पात र सडक भिजिसकेका थिए। प्रातःकालीन हावा तल बोटानिकल गार्डेनबाट उँभो हानिएर बगिरहेथ्यो। रुखका पातहरू सरसर गर्दै मन्द-मन्द गतिले हल्लिरहेका थिए।

त्यसै बेला कोही हिँडिरहेको जुत्ताको आवाज आयो। जुत्ताको भद्दा "ग्याप-ग्याप" आवाज झन्-झन् नजिकै आउँदै गयो। लङ्गडाले मुन्टो तानेर आग्लोबाट चियायो। एउटा पुलिस माथिबाट आउन लागेको रहेछ ! पुलिसलाई देख्नासाथ ऊ झस्क्यो। ऊ भित्तापट्टि टाँसियो र सास रोकेर बसिरह्यो। उसको मुटु ढुकढुक गर्न थाल्यो। उसका दुवै आँखा चञ्चल भइउठे...। उसका दुवै कानले जुत्ताको त्यो भद्दा आवाजलाई अनुसरण गरिरहेका थिए। त्यो जुत्ताको आवाज एक छिनपछि पातलो हुँदै गयो अनि बिस्तार-बिस्तार नसुनिने हुँदै त्यो आवाज त्यतिकै हरायो।

लङ्गडाले लामो निःश्वास लियो। झर्को मानेर एक छिन गुनगुनाइरह्यो। उसले एउटा बिडी झिकेर सल्कायो र धुवाँको बीचमा लट्टिएर झोक्रिरह्यो।

बिहान भइसकेको थियो। चारैतिर राम्रै उज्यालो भइसकेको थियो। हावा केही जोरले बग्न थाल्यो। लङ्गडालाई साह्रै जाडो लाग्न थाल्यो।

सधैँ त लङ्गडा बिहानै उठेर घस्रँदै चियाको पसलमा गएर चिया मागेर खान्थ्यो। जाडोको महिनामा उसलाई बिहानै चिया नभई हुँदैनथ्यो। आज लङ्गडा मन मारेर आफ्नो झुप्रोमा धेरै बेरसम्म बसिरह्यो। उसको मनमा न केही उत्साह थियो, न हर्ष, न आशा। उसले आफ्ना दुवै हातले मुख छोप्यो। ऊ झोक्रिरह्यो। प्रतिदिन बाँच्नका निम्ति उसले माग्नु पर्थ्यो- तर यो एकनाससित बितिरहेको जीवनले आज उसलाई ज्यादै विरक्त पार्‍यो।

एउटा साथीको रूपमा आफ्नो दुःख-सुखमा टाँसिएर बसेको एउटा मूक पशु त थियो, त्यसैको निःस्वार्थ प्रेममा, त्यसैको मोहमा ऊ बाँचिरहेको थियो।

यसरी धेरै बेरसम्म ऊ त्यहीँ बसिरह्यो। वारिपारि घरहरूमा बल्ल बिहानको घाम लागेको देखियो। लङ्गडाले लामो निःश्वास लियो- आफ्नो पोको काँधमा भिर्‍यो र आफ्ना लट्ठी र दुवै हातमा काठ समातेर बाहिर निस्क्यो।

यसरी लङ्गडा बिस्तार-बिस्तार आज एक्लै गड्डीखानको उकालो घस्रँदै हिँडिरहेको थियो।

चोकभरि आइतबारको हाट लागेको थियो। चारैतिर सागसब्जीको पसलले फाँट डम्म थियो। हाट भर्न आउने मानिस धेरै थिए। लङ्गडा त्यहाँ पनि नबसी बिस्तार-बिस्तार स्टेसनतिर गयो। उसलाई सपनाको कुरा सम्झना भइरहेथ्यो। ऊ धीरधामको फाटकसम्म घस्रँदै पुग्यो। उसले यताउति हेर्‍यो, बाटामुनि-माथि पनि हेर्‍यो- चारैतिर आँखा घुमायो। तर कुकुर भने त्यहाँ थिएन। सपनामा आफूले देखेको बिजुलीको खाँबा पनि त्यहाँ रहेनछ... !

ऊ निकै बेर त्यहाँ बसिरह्यो। तर आज लङ्गडाले हात पसारेर बाटा हिँड्ने मानिसलाई भिक्षा मागेन। ऊ केवल मानिसको मुखमा मात्र पुलुक्क हेर्दथ्यो। उसको अनुहार-आकृति नै उदास थियो। एक-दुई मानिसले लङ्गडाको अघिल्तिर चार पैसा फालिदिए। लङ्गडाले केही नबोली पैसा टिप्यो र शून्य दृष्टिले टाढातिर हेरिरह्यो।

एउटा चिल आएर बाटामुनिको चाँपको रुखको एउटा हाँगोमा बस्यो। लङ्गडाले त्यो चिललाई हेर्‍यो। आज उसलाई आफू पनि त्यो चिलजस्तै भएर आकाश-आकाश उड्दै सहर, पहाड, जङ्गल, खोला, नाला काटी मुलुक-मुलुक डुल्ने इच्छा भयो... देश-विदेश हेर्ने इच्छा भयो...।

त्यसै बखत पारीपट्टि कसैको कुकुरको छाउरो एकोहोरो भुकेको स्वर सुनियो। लङ्गडा झसङ्ग भयो। आज कुनै कुकुरको भुकाइले पनि ऊ झसङ्ग हुन्थ्यो। उसले पारी गाउँमा हेर्न खोज्यो- त्यहाँ आठ-दस जना मान्छे आँगनमा थुप्रिएर तास खेलिरहेका रहेछन्। परतिर केटाकेटीहरू पनि घाममा खेलिरहेका रहेछन्। एउटा खैरे कुकुरलाई कसले जिस्काइरहेको रहेछ। लङ्गडालाई विरक्त लागेर आयो। अब उसलाई त्यहाँ बस्ने मन भएन। ऊ त्यहाँबाट पनि हिँड्यो। जज-बजारमा आइपुग्दा रेलको लिगनेर दुईवटा कुकुरहरू घाममा पल्टेर सुतिरहेका देख्यो। लङ्गडाले धेरै बेरसम्म ती कुकुरहरूलाई

हेरिरह्यो । ऊ केही सोचिरहेको थियो । त्यहाँबाट घस्रँदै ऊ फेरि चोकको एक कुनामा आइपुग्यो । त्यहाँ पनि चारैतिर हाट भर्न आउने मान्छेको भीड रहेछ । उसलाई दिक्क लाग्यो ।

ऊ घस्रँदै हाइस्कुल जाने सडकको मोडमा फेरि आयो । उसलाई भोक लागिरहेको थियो ।

दस बजिसकेको थियो ।

एउटा भलादमी तलतिरबाट आइरहेको थियो । लङ्गडाको मनमा सानो आशा पलायो । ऊ हत्तपत्त घस्रँदै सडकको माझमा आयो र भलादमीलाई सलाम गर्दै पैसा माग्यो- "हजुर..."

त्यो भलादमी तर्केर गयो । त्यसले फरक्क फर्की घृणापूर्ण आँखाले लङ्गडातिर हेर्‍यो । लङ्गडाको स्पर्शले मात्र पनि त्यसको शरीरमा फोहोर लाग्ला जत्तिकै त्यसले गर्‍यो ! लङ्गडा आश्चर्यले विस्मित भयो । त्यो मानिसमा मानवताको एक बुँदसम्म पनि रहेनछ । उसले त्यो भलादमीलाई त सधैँ देख्ने नै गरेको थियो- अरू किरानिहरू सरह त्यो पनि आफ्नो अड्डा रोजै त्यहाँबाट जाने गर्थ्यो ! कहिलेकाहीँ त्यसलाई आफ्ना परिवारका साथ हाटतिर डुलिरहेको पनि देखेको थियो । लङ्गडाले प्रायः त्यसलाई देख्ने गरेको, त्यसले पनि लङ्गडालाई रोजै मागिरहेको देखेको ! परन्तु त्यो त भलादमी थियो ! त्योसित सुन्दर स्वास्थ्य थियो ! त्योसित पैसा थियो । अनि लङ्गडा थियो पङ्गु, सडकको माग्ने ! भिन्नता त्यसैमा थियो । हुनलाई त ऊ पनि मान्छे, ऊ पनि मान्छे । तर आफू भलादमी हुँ भन्ने सम्झी ऊ मानवताको तहबाट धेरै तलतिर गिरेको थियो ।

लङ्गडा फर्केर अघिकै ठाउँमा आएर बस्यो । दुनियाँको यो विचित्रता देखेर ऊ जिल्ल परी हाँस्न खोजिरहेको थियो । तर उसको हँसाइमा आँसु बादल भएर मानव-हृदयको अन्तरभित्र रसिन पुग्दथ्यो । किनभने अन्तर्द्वन्द्वले उसलाई विक्षुब्ध पारिसकेको थियो । उसका आँखामा सभ्य समाजप्रति अवज्ञा नाचिरहेको थियो । उपेक्षा, उदासीनता, अकर्मण्यता र सङ्घर्षका हजारौँ फिलिङ्गाहरू आएर उसको हृदयलाई डाम्न खोज्थे । तर ऊ मूक नै थियो । ऊ बोल्न पनि सक्दैनथ्यो । त्यो त उसको निम्ति रोजै भइरहने घटना थियो... ।

मास्तिरबाट एउटा अल्लारे ठिटो हातमा नाम्लो झुन्ड्याएर कोइलाको पसलतिर गइरहेको थियो । कोइला बोक्दा-बोक्दा उसको शरीरको वस्त्र र अनुहारसमेत कोइलाजस्तै भइसकेको र पसिना उसको निधारबाट बगिरहेको थियो । कालो बिर्के टोपी लाएको, मैलो अस्कट लाएको, घुँडा नछोपिने गरी आधा सुरुवाल लाएको, दौरामाथि पटुका पनि बाँधेको थियो । उसको अनुहारमा निर्दोष हाँसो खेलिरहेको थियो । जुँगाको रेखी बसिसकेको, ठूला-ठूला तिघ्रा भएको जवान ठिटो थियो । अस्ति दसैँ-तिहारमा आफूले गाएको तामाङ गीतको भाका हाल्दै आफ्नै धुनमा ओरालो कोइलाको पसलमा जान लागेको थियो । उसको आँखा लङ्गडामाथि पर्‍यो । ऊ गुनगुनाउन छोडेर ठिङ्ग उभियो । उसका आँखा आश्चर्य र जिज्ञासाले चम्के ।

उसले लङ्गडालाई एक छिनसम्म हेरेर केही सोध्न खोजेको थियो तर ऊ चुप लाग्यो । सोधेन । उसले आफ्नो अस्कट छाम्यो । एउटा तामाको पैसा र दुइटा दुअन्नी भेट्टायो । हातको नाम्लो काँधमा फाल्यो र लङ्गडाको अघिल्तिर आएर खस्रो परन्तु सहानुभूतिको कण्ठमा भन्यो- "ए दाइ ! लौ चिया-खाजा किनेर खाऊ !"

लङ्गडाले हात पसार्‍यो । एउटा तामाको पैसा र दुइटा दुअन्नी हातमा खसे । छक्क परेर लङ्गडाले त्यो जवानको आँखामा पुलुक्क हेर्‍यो । त्यो जवान हाँसिरहेको थियो । उसको अनुहार कोइलाको धुलोले कालो देखिए तापनि त्यो कोइला बोक्ने कुल्लीको अभ्यन्तर उदारता, मानवता र आत्मीयताले साह्रै उज्ज्वल, साह्रै पवित्र र निष्कलङ्क देखिन्थ्यो !

त्यो जवान कुल्ली फेरि तामाङ गीतको भाका हाल्दै छिँडीतिर पस्यो । लङ्गडाले उसलाई हेरिरहेको थियो, निस्फिक्रीसित त्यो जवान आफ्नो गीतको लयमा हातको नाम्लो हल्लाउँदै गइरहेको थियो । एकै छिनपछि एउटा भित्ताले उसलाई छेक्यो र ऊ नदेखिने भयो ।

लङ्गडाले लामो सुस्केरा हाल्यो ।

आधा दिनसम्म ऊ यता र उता गरिरह्यो, कहिले चोकको फाँटमा बसिरह्यो, कहिले पानको पसलको अघिल्तिर बसिरह्यो, कहिले मासुको पसलतिर गएर बसिरह्यो ।

लङ्गडालाई दिक्क लाग्यो। ऊ चौरस्तातिर जान लाग्यो। दिन रमाइलो गरी उघ्रेको थियो। सिनेमा हेर्न जाने मानिसहरू रिक सिनेमातिर जान लागेका थिए। लङ्गडा पनि आफ्ना दुवै पाखुराको बलले घस्रँदै उकालो गइरहेको थियो। बिचउड रोडबाट ऊ फेरि उकालो लाग्यो। ठूलो डाकघरको अघिल्तिर घुम्तीमा पनि ऊ आइपुगेको थियो, माथिबाट ओरालो वेगले दौडाएर ल्याएको एउटा मोटरले लङ्गडालाई किल्चेर झन्डै धुलो पाऱ्यो।

तर मोटर वेगले हानिएर सडकको छेउतिर गयो र लङ्गडा अलिकतिले बाँच्यो। तर लङ्गडालाई त्यो केही जस्तो लागेन। उसको अनुहार एकोहोरो थियो- ऊ अर्कै भावमा, अर्कै विचारमा डुबेको थियो।

मानिसहरू उसको अघिल्तिर-पछिल्तिर हिँडिरहेका थिए, कुनै-कुनै मानिसले हातमा छाता बोकेर वा लट्ठी टेकेर लामा-लामा पाइला सार्दै आफ्नो अघिल्तिर हिँडिरहेको देख्यो भने ऊ त्यो मानिसलाई धेरै बेर हेरिरहन्थ्यो अनि अन्यमनस्क भावले आफ्नो घुँडा मुसार्थ्यो, गोडा छाम्थ्यो र एउटा उद्वेगले ऊ घस्रँदै हिँड्न थाल्थ्यो। ऊ पनि त्यसरी नै त्यो असल मान्छे जस्तो हिँड्न खोज्थ्यो।

यसरी मोटरले झन्डै किचेर उसलाई मारेको, एक जना मान्छेले हेरिरहेको थियो। त्यो मान्छे आफ्नो भद्दा जुत्ता ग्र्याप-ग्र्याप बजाउँदै लङ्गडाको छेउमा आयो र भन्यो, "...आँखा छैन? छेउ लागेर हिँड्नुपर्छ नि ! मोटरले किचेको भए... हरे, आन्द्राभुँडी निस्कने..."

लङ्गडाले त्यो मानिसको मुखमा पुलुक्क हेऱ्यो। त्यसले बोलेको भाषा नबुझेजस्तो गरेर त्यस मानिसको अनुहार वाल्ल परेर हेरिरह्यो। त्यो मानिस फेरि अलि झर्को मानेजस्तो गऱ्यो तर फेरि केही भनेन। एक छिनपछि त्यो मानिस असजिलो मानेर नजिकको एउटा रेस्टुराँतिर गयो। लङ्गडाको आँखाले त्यसलाई पछ्याइरहेको थियो। तर रेस्टुराँभित्र पसेर त्यो मानिस फेरि निस्केन। एक छिनपछि त्यो रेस्टुराँभित्रबाट एक जना ठिटो र दुइटी ठिटीहरू निस्के। त्यो नेपाली ठिटोको पोसाक अङ्ग्रेजको जस्तो थियो, हातमा सिगरेटको टिन र मुखमा सिगरेटको ठुटो पनि च्यापेको थियो, अनुहार गोरो भए पनि त्यो निस्तेज, कान्तिहीन, निम्बु निचोरेको जस्तो अनुहार थियो। ती ठिटीहरूका हातमा एकै रङका ब्याग थिए। दुवैका अनुहार त गोरा तर अनुहारमा पाउडर, क्रिम र ओठमा लिपस्टिक दलेको थियो- हेर्दा जापानी पुतलीजस्ता देखिन्थे। एक जना ठिटीले त हातमा सिगरेट पनि च्यापेकी थिई ! त्यसका दुवै आँखीभौं लेख्न नजान्ने चित्रकारले कोरेजस्ता काला, बेढबका धर्सा थिए।

त्यो देख्ता लङ्गडाको भाव-तरङ्ग एक छिन खलबलियो- उसलाई लाग्यो, यिनै प्राणीहरू सिनेमाका नायक-नायिका बनेर दुनियाँमा रङ्गमञ्च देखाउँदा होलान् !

ऊ त्यहाँ पनि धेरै बस्न सकेन। लङ्गडा फेरि उकालो जान लाग्यो। हेर्दा टाउन हलको घडीमा अढाई बज्न लागेको रहेछ।

टाउन हलको फाटकको सम्मुख आइपुग्दा माथिबाट एउटा मोटर आयो र फाटककै अघिल्तिर थामियो। भित्रबाट एक जना मानिस निस्क्यो। मानिस पुड्को थियो तर पोसाक भने अङ्ग्रेजकै जस्तो थियो। मोटरबाट एक जना स्वास्नीमान्छे पनि निस्कन लागेकी थिई। त्यसले आँखामा गगल्स लाएकी थिई, त्यसका ओठमा रातै लिपिएको लिपस्टिक टाढैबाट छर्लङ्ग देखिन्थ्यो। लङ्गडा हेरिरहेको थियो- ती दुवै नेपाली नै रहेछन् !

दुवै क्यापिटल सिनेमाघरतिर लागे। लङ्गडाले पछिल्तिरबाट हेरिरह्यो। उसका आँखामा, त्यो स्वास्नीमान्छेले हातको ब्याग हल्लाउँदै, कम्मर मर्काई-मर्काई त्यस मानिसको पाखुरा समातेर हिँडिरहेको दृश्य धेरै बेर नाचिरह्यो।

लङ्गडाको अघिल्तिर दुई-तीनवटा सिनेमाका पोस्टरहरू टाँसिएका थिए। एउटा पोस्टरमा लडाइँको वीभत्स दृश्य थियो। अर्कोमा एक जना मानिसले अर्कोलाई गोली हान्न लागेको थियो, अर्कोमा एउटी ठिटीलाई आफ्ना बाहुपाशमा राखी एउटा युवकले म्वाइँ खाइरहेको दृश्य थियो। यी पोस्टरहरूलाई केही बेर लङ्गडाले हेरिरह्यो।

लङ्गडा त्यहाँ धेरै नबसी फेरि बजारतिर आयो। यसरी दिनभरि यता र उता गरिरह्यो। उसलाई कता जाऊँ कता जाऊँ जस्तो लागिरहेको थियो।

यसो हुँदा-हुँदै दिन ढल्किन लाग्न लागेको थियो।

**७.**

अब ऊ बिस्तार-बिस्तार लोयङ्ग रोडको उकालोमा घस्रन थाल्यो। उसका दायाँ र बायाँ घडीका पसल र जुत्ताका पसलहरू थिए। मानिसहरू त्यतिकै हिँडिरहेका थिए। सबै आ-आफ्ना विचारमा मस्त थिए। कसैलाई लङ्गडाको मानसिक अवस्थामाथि विचार गर्ने अवकाश थिएन... कसैलाई उसको अवस्थामाथि सहानुभूति प्रकट गर्ने समय थिएन।

सडकमुनि-माथि त्यस्तै घर, कोठी, पसल, होटेल, रेस्टुराँ थिए जहाँ लङ्गडाभन्दा धेरै असल र धनी मानिसहरू थिए- जहाँ ऐश्वर्यको निम्ति उनीहरूसित अनेक साधन थिए। ती मानिसहरूले लङ्गडाजस्तो घस्री-घस्री माग्नु पर्दैनथ्यो, पेट पाल्नु पर्दैनथ्यो- जाडोदेखि बाँच्न बोरा वा थाङ्नामा बेरिएर, च्याथ्रा भइसकेका लुगा लाएर कसैको दलान-दलान आश्रय लिएर रात काट्नु पर्दैनथ्यो। पानी-झरीदेखि बाँच्न कसैको कुनाकाप्चा, दलान र बिल्डिङहरूमुनि गएर ओत लाग्नु पर्दैनथ्यो। बाँच्नका निम्ति तिनीहरूले लङ्गडाजस्तो हीन भएर दिनमा पनि, रातमा पनि सङ्घर्ष गर्नुपर्दैनथ्यो।

यसरी घस्रँदै ऊ फेरि माउन्ट प्लेजेन्ट रोडको मोडमा आइपुग्यो। ऊ बाटाका रेलिङको छेउमा बस्यो। उसलाई रिँगटा चल्लाजस्तो भइरहेथ्यो। लङ्गडाको सामुन्ने एउटा पानको पसल थियो। पसलको देब्रेतिर सिनेमाका ठूला-ठूला दुई रङ्गीन पोस्टरहरू थिए, उसले ती पोस्टरहरू हेरिरह्यो। दुनियाँले आफ्नो ऐश्वर्य र मनोरञ्जनका निम्ति कति धन, कति परिश्रम व्यय गर्दा रहेछन् ! एउटा काल्पनिक छायाको पछि-पछि लागेर दुनियाँ नै आज कसरी बौलाहा भएर हिँड्दा रहेछन्...। लङ्गडाले विचार गर्‍यो। आज आफू रहेको त्यही दुनियाँमा, त्यही मानव-संसारमा आफूचाहिँ एउटा हतभागी प्राणी भएर बाँचिरहेको छ ! धनी र दरिद्रको संसारमा कति भिन्नता रहेछ, त्यो आज लङ्गडाले बुझ्यो।

ऊ झोक्रिरहेको त थियो तर उसका दुवै आँखाले सडकमा हिँड्ने ती मानिसहरूलाई, जो लङ्गडाभन्दा धेरै सुखी थिए, हेरिरहेका थिए। उनीहरूको जीउमा हेरेर उसले आफ्नो फाटिसकेको लुगातिर पनि हेर्‍यो, आज उसलाई आफ्नो संसार कस्तो-कस्तो लाग्यो। आज उसलाई संसारमा बाँच्ने इच्छा नै भएन।

आफू जन्म्यो, बढ्यो र दीर्घकालदेखि उसले यसरी आफ्नो जीवन बिताइरहेको थियो, आफ्नो अवस्था सम्झँदा आज परमेश्वरले ऊमाथि अवहेलना र अन्याय गरेजस्तो लाग्यो...। उसका दुवै आँखा आँसुले डबडब भए। ऊ मूक भएर बसिरह्यो। तर सडकमा हिँड्ने मानिसहरू- आ-आफ्ना विचारमा मग्न भएर हाँस्दै एकोहोरो हिँडिरहेका थिए।

उसले मानिसहरूलाई यस्तो दृष्टिले हेर्दथ्यो, मानौँ उसका आँखाले भाषाहीन विवाद गरिरहेथ्यो। उसको अन्तरमा सायद ठूलो हुरी चलिरहेथ्यो- उसको पीडित आत्माले सायद यसो भनिरहेको थियो, 'आज एउटा माग्ने, खोरन्डे भएर पृथ्वीमा घस्री-घस्री बाँचिरहेको छ। ईश्वर ! गरिब, अन्धा, लुला, लङ्गडा, खोरन्डेको निम्ति किन संसार बनायौ? उनीहरूलाई यो संसारमा किन बाँच्न दियौ? उनीहरूलाई किन यसरी यन्त्रणा भोग्न दिइरहेछौ?'

'मैले देख्दा-देख्दै ती मानिसहरू हाँस्दै हिँडिरहेका छन्- उनीहरूले म जस्तो घस्री-घस्री पेट पाल्नु पर्दैन। मैले दिन-प्रतिदिन अरूले दिएको भिक्षाले पेट भर्नुपर्छ। ती असल-असल घर र अट्टालिकामा बस्ने धनी, अल्मस्तीहरू मोटरमा हावा खान्छन्; रेस, सिनेमा, होटेल, नाचगानमा भुलिरहन्छन्... ...ओहो, म? मेरा यी दुवै खुट्टा काम नलाग्ने छन्, मसित आफ्नो पेट पाल्ने धन पनि छैन, म मानिसको घुइँचोभित्र रहेर पनि समाजहीन भएर आज कसरी एक्लो जीवन बिताइरहेको छु ! मेरो एउटा साथी थियो, ऊ पनि अहिले छैन। अब म केका निम्ति बाँचूँ? कसको निम्ति जिऊँ? अहिले समाज र पृथ्वीको पनि म भार भइरहेछु। मैले जन्म लिएर संसारमा जो देखेँ, त्यति नै मेरा निम्ति पर्याप्त छ। अब अर्को जुनीमा फेरि माग्ने भएर नजन्मूँ ! म जस्ता माग्नेको निम्ति यो संसार होइन रहेछ। म अहिले संसारको भारले, मानव-अत्याचारले कसरी थिचिएको छु... अब यो संसारदेखि जति चाँडो बिदा लिन सकुँला, उति मेरो निम्ति राम्रो छ। जीवनको यो ठूलो यातना र कष्टबाट त म सधैँको निम्ति मुक्त हुन सक्नेछु।'

लङ्गडाका गालामा आँसु बगिरहेथ्यो। ऊ मौन थियो। आँसुले लतपत भइसकेका उसका आँखामा विषाद र यन्त्रणाको भाव झल्किरहेको थियो। फलामको रेलिङलाई उसले दुवै हातले समात्यो र धेरै बेर हातको बलले झुन्डिई अढेस लागेर ऊ घोप्टिरह्यो।

आकाश बादलले ढाक्दै आइरहेको थियो।

आज पनि सूर्यास्त हुँदा हिमालमा फेरि उस्तै रमाइलो गरी घामको पहेँलो आभा पऱ्यो। आधा बादल ढाकेको हिमालको छातीदेखि उँभो देखिने टाकुराहरूमा गुलाफी किरण साह्रै रमाइलो तर उदास लाग्दो गरी खेलिरहेको थियो।

हेर्दा-हेर्दै पातलो अन्धकार छाउँदै आयो। दिउँसोको भीड घटिसकेको थियो। पसलेहरू आ-आफ्ना पसल थुन्दै थिए। हाट भर्न आउने मानिसहरू आ-आफ्ना घर फर्किसकेका थिए। कोलाहल थोरै हुँदै गइरहेथ्यो। बिजुली चारैतिर बलिसकेको थियो। बिस्तारै चिसो हावा पनि बगिरहेको थियो।

लङ्गडाले टाउको उठाएर चारैतिर हेऱ्यो। उसको कण्ठ सुकिसकेको थियो। भोकले ऊ कमजोर भइसकेको थियो। घस्रँदै हिँड्ने शक्ति पनि अब उसमा थिएन। उसलाई आफ्नै कुकुरको मात्र सम्झना भइरहेथ्यो। ऊ बिस्तार-बिस्तार घस्रँदै तल चोकको सामुन्ने आयो। उसले चारैतिर हेऱ्यो। नजिकैको पानको पसलअघिल्तिर एउटा खैरे रङको कुकुर गल्लीबाट फुत्त आयो र ओरालो गयो, लङ्गडा झस्क्यो। ऊ एक छिनसम्म एकोहोरो त्यतापट्टि नै हेरिरह्यो। तर कुकुरलाई भने उसले देखेन। एउटा युवक मुखमा चुरोट च्यापेर त्यहाँ फेरि पान खान आयो। एउटी तरुणी ठिटी पनि त्यहीँ पान किन्न आई। लङ्गडा हेरिरहेको थियो। युवक र ठिटी दुवै हाँसिरहेका थिए, पानको पसले पनि आफ्नो लामो दाह्री मुसार्दै उनीहरूसित मुस्कुराइरहेको थियो। लङ्गडा एक छिनसम्म त्यो हेरिरह्यो र फेरि ओरालो घस्रँदै गयो।

लङ्गडा तल मासु बेच्ने पसलको सामुन्ने आएर बस्यो। उसको अघिल्तिर मोटर-स्ट्यान्ड थियो। ड्राइभरहरू कोही ओभरकोट लाएर गाडीभित्र कुरिरहेका थिए, कोही सिनेमाको गीत गाउँदै यताउता पेसेन्जर खोजिरहेका थिए। एक जना बूढो ड्राइभर माथिबाट लरखिँरिदै आयो, त्यो मातेर टन्न थियो। आएर लङ्गडाको छेउमा उभियो। त्यसले लङ्गडालाई देख्यो र एक छिन हेरिरह्यो। लटपटिएको बोलीमा त्यसले केही कुरा गुनगुनायो। फेरि त्यसले पकेट छामेर पैसा निकाल्यो र लङ्गडाको अघिल्तिर फ्याँकिदियो। एउटा दुअन्नी लङ्गडाकै छेउमा खस्यो, अर्को एकन्नी अलि परतिर झऱ्यो र अर्को चारन्नीजस्तो थियो, लड्दै नालीमा खस्यो। त्यो बूढो ड्राइभर लङ्गडालाई हेरेर हाँस्यो र फेरि नबुझिने गरी गुनगुनाउँदै तलतिर गयो।

अर्को एक जना पुड्को मान्छे परबाट आइरहेको थियो, त्यो पनि रक्सीले मातेको थियो। ओभरकोटका दुवै पकेटमा त्यसले हात घुसारेको थियो। सडक हिँड्ने एक-दुई जना मानिसलाई धक्का दिँदै त्यो बेसुरमा हिँडिरहेको थियो। त्यो लरखिँरिदै लङ्गडाको नजिकै आउन लागेको थियो। बिजुलीको प्रकाशमा लङ्गडाले राम्रै देख्यो- त्यो मान्छे त दिउँसो टाउन हलमा एउटी आइमाईसित सिनेमा हेर्न जाने मान्छे नै पो रहेछ ! लङ्गडा डराएर नालीको भित्तामा अढेस लाग्यो। त्यो मान्छे मास्तिर गयो।

अन्धकार छाइसकेको थियो। अहिले हावा चलिरहेको थियो। लङ्गडालाई कहाँ जाऊँ, कहाँ जाऊँ भइरहेथ्यो। ऊ घस्रँदै चोकको ठूलो बिजुली-खम्बामुनि आएर बस्यो। चोकका पसलेहरूले आ-आफ्ना पसल थुन्दै थिए। बिजुली चारैतिर बलिरहेका थिए। परबाट एउटा अग्लो मानिस आयो, त्यो मानिस सरासर आएर लङ्गडाको पछिल्तिर ठिङ्ग उभियो। त्यसले पकेटबाट चुरोट झिक्यो र सल्कायो- तल भुइँबाट लङ्गडाले पछिल्तिर फर्केर मास्तिर त्यो अग्लो मानिसको मुख हेर्न खोजिरहेथ्यो। दियासलाईको उज्यालोमा उसले एउटा परिचित अनुहार देख्यो, त्यो त पुलिसको एउटा अफिसर पो रहेछ। त्यो मुखबाट बुङबुङ धुवाँ फालिरहेथ्यो। पुलिसको अफिसरलाई देख्नासाथ लङ्गडाको हृदय ढुकढुक गर्न थाल्यो। त्यहाँबाट घस्रँदै-घस्रँदै ऊ परतिर गयो। अब चिसो हावा बगिरहेथ्यो। पानी पनि पर्ला-पर्ला जस्तो भइसकेको थियो।

हेर्दा-हेर्दै आकाशबाट पानीका छिटाहरू खस्न थाले। आकाश मेघले ढाकेर केही नदेखिनेजस्तो भइसकेको थियो। लङ्गडा घस्रँदै तलतिर आयो। एउटा पसले आफ्नो पसल थुन्न लागेको थियो। लङ्गडा त्यहीँ गएर ओत लाग्न खोज्यो। तर पसलेले भित्रबाट लङ्गडालाई देखिहाल्यो ! पसलेले लङ्गडालाई त्यहाँ बस्न नदिँदा ऊ एक छिनसम्म यता र उता गरिरह्यो।

हावा झन् वेगले चलिरहेको थियो। पानीले सडक भिज्न लागेको थियो। लङ्गडालाई कसो गरूँ भइरहेको थियो। ऊ घस्रँदै आएर बजारको मन्दिरको छेउमा एउटा साँघुरो छिँडी छ, त्यहाँ गएर पानीदेखि बाँच्न ओत लाग्यो। उसको जीउ कामिरहेको थियो। मुटु अज्ञात भयले ढुकढुक गरिरहेथ्यो। उसको शरीरको बल हराइसकेको थियो। ऊ स्वाँ-स्वाँ गरेर नाकबाट निःश्वास लिइरहेको थियो।

हुरी बडो वेगले चल्न थाल्यो । ढिलो पसल थुन्ने एक-दुई पसलेहरूको पसल पनि अब त थुनिसकेका थिए । चोक र वरपर प्रायः सुनसान भइसकेको थियो, कहिले हुरीको वेग आउँथ्यो- कहिले पानीको बाछिटा हुरीले उडाएर गोलीका पर्राहरूझैं ल्याउँथ्यो ।

लङ्गडा चुपचाप भित्तामा अढेस लागेर बसिरहेको थियो । प्रकृतिको क्रूर ताण्डव नृत्यले उसलाई विस्मित बनाइरहेको थियो । बौलाहा हुरी भने कहिले घरहरूतिर ठोकिएर, कहिले बिजुलीको खाँबातिर ठोकिएर हु-हु गर्दै एउटा गम्भीर स्वरले बगिरहेथ्यो । कहिले बिजुलीको तार र टेलिफोनका तारहरूमा बतास ठोकिएर सिँ... सिँ... गर्ने एक किसिमको, कस्तो-कस्तो मनै रुवाउने उदासीन तर धीमा आवाज आउँथ्यो- रातको निस्तब्धतामा केवल हुरीको वेगका साथ यस्तो उदासीन आवाज गरी प्रकृतिले पनि संसारको एउटा हतभागी मानवको निम्ति गम्भीर सहानुभूति प्रकट गरिरहेको थियो ।

यसो हुँदा-हुँदै पानी वेगले पर्न थाल्यो । लङ्गडा बसेको ठाउँ पहिले केही ओभानो थियो तर आकाशको पानीले मन्दिरको भित्ताबाट पानी धारा भएर बग्न थाल्यो । लङ्गडा अब एक छिन त्यहाँ बस्न नसक्ने भयो ।

लङ्गडा भिज्दै त्यहाँबाट मास्तिर आयो । पानीले ऊ भिजिरहेको थियो । ऊ पछिल्तिरको बजारको डाकघरमा ओत लाग्ने विचार लिएर सिँढीमा हात-खुट्टाले टेकेर उक्लन थाल्यो र थरथर काम्दै एउटा कुनामा बस्यो... ।

त्यहाँबाट सडक र चोक वरपर शून्य देखिन्थ्यो। आकाशबाट खसेको मुसलधारे पानीले सडक र चोकको फाँट पखालिरहेथ्यो। बिजुलीको प्रकाश पनि मधुरो देखिन्थ्यो ! ठाउँ-ठाउँमा बिजुलीको छाया सडकमा परेको देखिन्थ्यो। आँधीले समुद्रका लहरहरूलाई उडाइरहे जस्तै हुरीको उत्ताल वेगले पानीका छिटाहरू पृथ्वीको तहमा लहरका लहर उडाइरहेको थियो । आकाशबाट यसरी मुसलधारे वृष्टि भइरहेथ्यो, मानौँ धुरीबाट कसैले पानी खन्याइरहेको छ । रुख, पात, घर, पसल, सडक, पार्क- सबै पानीले रुझाउँदै थियो । बिजुली बेला-बेलामा चम्कँदा अघिल्तिरको अग्लो बिजुलीको खाँबा, वरपरका पसल, घर र बिल्डिङहरूको कालो छाया मात्र देखिन्थे । यो महावृष्टिले उनीहरूलाई छोपिसकेको थियो । पृथ्वी अब एकै छिनमा जलमा भासिएला भनेजस्तो गरी यसरी घनघोर वर्षा भइरहेथ्यो ।

सडकमा एक जना मानिस छाता ओढेर गइरहेथ्यो । सडक जनशून्य भइसकेको थियो । त्यो मानिसको लमतन्ने धमिलो छाया मात्र देखिन्थ्यो। त्यो मानिसलाई देख्ता लङ्गडालाई आफ्नो कुकुर त्यसका पछि-पछि गइरहेको जस्तो लाग्यो। राम्ररी हेर्दा त्यसको छाया रहेछ । पर पुगेपछि त्यो मान्छे पानीमा नदेखिने भयो ।

लङ्गडा मुसा भिजेजस्तो भइसकेको थियो । थुरथुर काम्दै प्रकृतिको त्यो क्रूर नृत्य हेरिरहेको थियो । आकाशमा बिजुली चम्कन्थ्यो, मेघको भीम गर्जन हुन्थ्यो । लङ्गडाको आँखा तिरमिरी हुन्थ्यो अनि फेरि अँध्यारो हुन्थ्यो । उसको जीउको लुगा भिजिसकेको थियो । यसरी धेरै बेर ऊ त्यहाँ बसिरह्यो । आधा रात भइसकेको थियो । अब पानी थामिएलाजस्तो भयो । जाडोले लङ्गडाको मुटु उत्तिकै कामिरहेको थियो । त्यहाँबाट सरेर अब कसैको दलानमा आश्रय लिने उसले विचार गऱ्यो ।

बिस्तार-बिस्तार घस्रँदै डाकघरको चिप्लो सिँढीबाट ओरालो झऱ्यो र बायाँपट्टि घुमेर नजिकको पसलनेर आयो । पानीले ऊ भिजिरहेकै थियो । लङ्गडा गल्लीतिर पस्यो । एउटा लामो काठको सिँडी उसले देख्यो । उसले यता र उता हेऱ्यो र बिस्तार-बिस्तार सिँडी छाम्दै उक्लन थाल्यो । माथि आइपुगेपछि उसले काठको रेलिङ समात्यो र एक छिन थकाइ माऱ्यो । उसको दम बढिरहेथ्यो । हावा भने उत्तिकै चलिरहेथ्यो । उसलाई साह्रै जाडो लाग्न थाल्यो । झन् त्यो काठको सिँढीमा हावा ज्यादै आउने हुनाले उसलाई त्यहाँ बसिनसक्नु भयो । उसका हात-खुट्टा कक्रिसकेका थिए । भिजेको आङको लुगामा हावाले फुक्दा जाडोले उसलाई साह्रै असह्य बनाइरहेथ्यो । उसलाई कता जाऊँ कता जाऊँ भइरह्यो ।

त्यहाँबाट परतिर कसैको दलानमा गएर रात बिताउने विचारले अन्धकारमा घस्रँदै ऊ भित्ता छाम्न लाग्यो । एक-दुई ढोका भेट्टायो । घरभित्रका मानिस निद्राबाट ब्युँझलान् भन्ने डरले चाल मारेर ऊ छामछाम-छुमछुम गरिरहेथ्यो । परतिर काठको ठूलो रित्तो बाकसजस्तो उसले भेट्टायो- त्यो बाकसको आड लिएर हावादेखि बाँच्ने विचारले बाकसमा अढेस लाग्यो ।

लामो निःश्वास लियो र आफ्नो पिठिउँको पोको झिक्यो । पानीले भिजेर त्यो पनि अहिले गह्रौँ भइसकेको थियो । कुनापट्टि सरेर उसले बाकसको छेउमा भएको मट्टितेलको टिनमा आफ्नो पोको राख्न खोज्यो- दुर्भाग्यवश त्यो टिन पल्टिएर तल खस्यो ! रातको निस्तब्ध वातावरणमा एउटा ठूलो आवाज भयो अनि फेरि चकमन्न भयो !

लङ्गडा पनि तर्स्यो- उसको होस नै हरायो ।

घरभित्रको मानिसको निद्रा भङ्ग भयो- त्यो आवाज सुनेर एक जना अग्लो दाह्री भएको मानिस हातमा लामो लौरो लिएर आयो। कोइला चोर्न आएको मानिस भन्ने सम्झेर त्यसले चारैतिर हेऱ्यो- तर लङ्गडा भने अन्धकारमा त्यही मानिसको गोडानेर डरले एक डल्लो परेर बसिरह्यो। त्यो मानिसलाई देखेर झन् डरले उसको मुटु ढुकढुक गर्न लाग्यो। कसो-कसो गर्दा त्यस मानिसको दृष्टि लङ्गडामाथि पर्न गयो- त्यसले हातको लौरो उचालेर के लङ्गडामाथि प्रहार गर्न आँटेको मात्र थियो, तल अन्धकारबाट एउटा करुण उद्गार आयो- "हजुर ! म त एउटा माग्ने लङ्गडा पो हुँ..."

त्यो मानिसले मच्चाएको लौरो थामियो। त्यसले लङ्गडालाई हेर्न खोज्यो। पहिले त अँध्यारोमा कालो लुगाको थुप्रोजस्तो देख्ता मान्छे नै हो भनेर ठिम्याउन सकेन। लङ्गडा अलिकति चलमल गरेको थाहा पाएपछि त्यो मानिसले हातको लौरोले लङ्गडालाई घोच्लाजस्तै गरेर केही बेरसम्म गाली बर्सायो। त्यसले आफ्नो बलियो पाखुराले लङ्गडालाई हातबाट तानेर घिसार्दै वर ल्यायो र सिँढी ओरालो मुन्टाइदियो।

रातको निस्तब्ध अन्धकारमा वायुको वेगसित एउटा हृदयविदारक चित्कार सुनियो अनि फेरि केही सुनिएन। चारैतिर चकमन्न भयो।

लङ्गडा सिँढीमा लड्दै तल खस्यो र बेहोस भएर लडिरह्यो।

लङ्गडाको अलिकति होस आएपछि उसले आफूलाई हिलोमा लडिरहेको पायो। चारैतिर निस्तब्ध थियो। उसले हिलोमा गाडिएको आफ्नो टाउको उठाउने बल त गऱ्यो तर सकेन। जाडोले उसका हात-खुट्टा सबै हिउँ भइसकेका रहेछन्। हिलोमा सुती-सुती उसले पृथ्वीदेखि माथि स्वर्गमा आँखा उठाएर हेऱ्यो- मेघयुक्त आकाशमा बिउँदो रातका ताराहरू साह्रै रमाइलो लाग्दो गरी चम्किरहेका रहेछन् ! हिजो रातिको डरलाग्दो आँधी र पानी पनि थामिएर अहिले चारैतिर प्रकृति मौन र स्थिर भइसकेको रहेछ। चारैतिर भर्खरै प्रातःकालीन वातावरण आएर एक प्रकारको शान्ति विराजमान भइसकेको रहेछ।

निकै बेर लङ्गडा त्यहीँ लडिरह्यो। उसका चिसा हात-खुट्टा निर्जीवजस्ता भइसकेका थिए। यसरी आफू भुइँमा लडिरहेको कारण उसले सम्झनै सकेन। सम्झँदा-सम्झँदा हिजो रातिको दुःखद घटनाको बल्ल उसलाई स्मरण भयो। उसलाई हिजोको एक-एक कुरा सम्झना भयो। त्यो सम्झँदा उसलाई साह्रै नरमाइलो लाग्यो ! मानिसप्रति उसको हृदयमा असह्य घृणा भइरहेको थियो। लङ्गडा अब साह्रै कष्टले उठ्यो। उसले आफ्नो अनुहार छाम्यो, उसका निधार र कन्पटमा चोट लागेको रहेछ। उसको निधारदेखि उँधो चिउँडोसम्म रगत बगेको थियो। उसले आफ्नै कोटको बाहुलाले रगत पुछ्यो र घस्रने बल गऱ्यो।

केही बेरपछि लङ्गडा बिस्तार-बिस्तार घस्रँदै सडकतिर आयो।

८.

बिहानको घाम मन्दिरको सेतो भित्तामा देखा पऱ्यो। दिन छ्याङ्ग उघ्रेको थियो। कस्तो रमाइलो ! सडकमा मानिसहरू हिँडिरहेका थिए। पसलेहरू आ-आफ्ना पसलहरू खोल्दै थिए। मन्दिरको सामुन्नेको पसलको छेउमा एउटा बिजुलीको खाँबानेर एक जना माग्ने घोप्टो परेर लडिरहेको थियो। त्यो माग्नेको जीउभरि हिलैहिलो थियो। उसले आफ्ना दुवै बाहुलाले मुख पनि छोपेको थियो।

सडकमा हिँड्ने मानिसहरूको मनमा शङ्का भयो। मानिसहरू जम्मा हुन थाले। हेर्दाहेर्दै मानिसको घुइँचो भयो। एक छिनमा एउटा पुलिस आयो र मन्दिरको अघिल्तिरको नेपालीको पुस्तक बेच्ने पसलमा गएर केही कुरा सोध्यो र ऊ घुइँचोतिर गयो। पुलिसलाई देखेर मानिसहरू अलिकति सरे। त्यहाँ अलिकति खलबल भयो। मानिसहरू परस्पर मुखामुख गरेर कुरा गरिरहेका थिए।

त्यो हल्ला सुनेर लङ्गडाले टाउको उठाउन खोज्यो। उसको निधारभरि रगतका टाटा थिए। एक छिनपछि उसले आँखा उघाऱ्यो र टाउको अलिकति उठाएर चारैतिर हेऱ्यो। चारैतिर हेर्नुभन्दा पहिले उसले आफ्नै साथी कुकुरलाई छेउमा बसिरहेको पायो।

कुकुरलाई देख्नासाथ लङ्गडाको आँखा हर्षले एकदम उज्यालो भयो।

अनि उसले धेरै बेरसम्म मलिन ज्योतिले आफ्नो हराएको साथीलाई हेरिरह्यो। कुकुरले पनि खुसीले पुच्छर हल्लायो ! लङ्गडाका आँखा आँसुले डबडब भए। उसले कुकुरलाई करुण दृष्टिले हेरिरहेको थियो। त्यो दृश्य जीवनको लामो यात्रामा जान लाग्दा कुनै आफ्नो आत्मीय बन्धुले रुँदै बिदा मागिरहेको जस्तो थियो।

लङ्गडाले दुवै हातको बलले उठ्ने चेष्टा गऱ्यो तर सकेन। उसले चारैतिर आँखा घुमाएर हेऱ्यो। उसले आफूलाई चारैतिर मानिस र पुलिसले घेरेको पायो। उसको चेतना-शक्ति बिस्तार-बिस्तार हराउँदै थियो। उसले उँभो आकाशतिर आँखा उठाएर हेर्दा मन्दिरको सेतो भित्ता र गजुर देख्यो, जहाँ बिहानको रमाइलो घाम भर्खरै खेल्न पुगेको थियो। मन्दिरका वरिपरि धेरै परेवाहरू उडिरहेका थिए। धेरै परेवाहरू बिहानको घाममा मन्दिरका अग्लो डिलनेर गुडगुडाउँदै नाचिरहेका थिए ! त्यो देखेर लङ्गडाको अनुहार अलि उज्यालो भयो। साह्रै कष्टसित उसले हात पसाऱ्यो र कुकुरलाई वर तानेर अँगालो हाल्यो। तर उसको निःश्वास क्षीण हुँदै गइरहेको थियो- उसले दुई-चार पल्ट खोक्यो र बाहुलाले मुख छोपेर भुइँमा घोप्टियो।

केही बेरपछि एक जना मानिसले लङ्गडाको टाउको उठाएर हेर्न खोज्यो- तर उसका दुवै आँखा सधैँका निम्ति चिम्म भइसकेका रहेछन्। उसले कुकुरलाई अँगालो हालेको हात पनि खुकुलो हुँदै गयो। उसको साथी कुकुरले भने धेरै बेरसम्म लङ्गडालाई छोड्दै छोडेन।

९.

साता दिनपछि-

एक छिन त्यो कुकुर फेरि बजारको एउटा गल्लीमा डुलिरहेको देखियो । मध्याह्नसम्म उद्देश्यहीन भएर त्यो एउटा पानको पसलअघिल्तिर यता र उता गरिरहेथ्यो । त्यो दिन पनि दिनभरि घामै लागेन । दिन अँध्यारै भइरह्यो । मेघले जम्मै आकाश छोपेर दिन साह्है नरमाइलो भएको थियो । मध्याह्नपछि त मेघ पनि गर्जन थाल्यो । पानी पर्ने छाँट देखियो । हावा चल्न थाल्यो । पानी छिट्याउन लागेको देखेर पसलेहरू आत्तिए । हेर्दा-हेर्दै केही बेरपछि राम्रै पानी पर्न थाल्यो ।

मुसलधारे पानीमा भिज्दै कुकुर यताउता गरिरहेथ्यो । मानिसहरू यत्रतत्र पसलमा ओत लागेका थिए । तर गाडीहरू भने सडकमा एकोहोरो हिँडिरहेका थिए । त्यो कुकुर पनि एउटा पसलको भित्तामा ओत लाग्न गयो तर पानीले त्यहाँ भिज्न थाल्यो । आखिर त्यो कुकुर के गरूँ के गरूँ जस्तो भएर एउटा अर्को पसलमा, मानिसकै छेउमा गएर ओत लाग्न खोज्यो । कुकुरलाई देखेर एउटा बुट लाउने मानिसले लात्ती उचालेर हान्न खोजेको थियो- कुकुर भागेर पर पुग्यो !

पर पुगेर कुकुरले पछिल्तिर फर्केर त्यो मानिसको अनुहारमा हेऱ्यो- कुकुरको कातर हेराइमा उत्तिकै घृणा र डर थियो । तर त्यो मानिस केही जस्तो नमानी मुखमा चुरोट च्यापेर बुङबुङ एकोहोरो धुवाँ फालिरहेको थियो... !

अर्को दिन फेरि-

रातभरि परेको पानी थामिसकेको थियो । प्रातःकालै त्यो कुकुर फेरि गड्डीखानको ओरालो गल्लीमा, लङ्गडा सुत्ने झुप्रोतिर लुखुर-लुखुर गइरहेको थियो । झुप्रो शून्य देखेर कुकुरले यताउता भुइँ सुँघ्यो । भित्र लङ्गडा सुत्ने गरेको दुईवटा फल्याक थिए । त्यहीँ गएर त्यो पनि गुँडुल्किएर सुत्न खोज्यो । कुकुर कामिरहेको थियो । त्यहाँ त्यो धेरै बेर सुत्न सकेन । कुकुर उठ्यो । त्यसले यता र उता चारैतिर हेऱ्यो । एउटा कुनामा लङ्गडाको फाटेर मक्किसकेको पुरानो कोट लत्रेको रहेछ । वरिपरि घुमेर कुकुरले त्यस लुगालाई पल्टाएर सुँघ्यो । कुकुर एक्लै थियो । त्यो फेरि बाहिर निस्क्यो, फेरि भित्र पस्यो । यसरी धेरै पल्ट त्यो मूक पशु आफ्नो आत्मीयको खोजमा झुप्रोभित्र र बाहिर गरिरह्यो ।

तर झुप्रो शून्य र निर्जन थियो । त्यसैले त्यहाँ उराठ लाग्ने उदासीनता छाएको थियो ।

ज्यादै असजिलो मानेर त्यो कुकुर फेरि सडकमा निस्क्यो, वरपर घर-घरमा, छानो-छानोमा बिहानको घाम परिसकेको थियो । कुकुर केही चीज घुइँघुइँती खोज्न लागेजस्तो गरेर गल्ली-गल्ली चाहारिरहेको थियो ।

दुई दिनपछि फेरि-

बिहानको घाम परेको एउटा भित्तानेर त्यो कुकुर लगलग काम्दै उभिरहेको थियो । थोरै बेरपछि फेरि जितेन-झोडाको माथि हावाघरमा त्यो कुकुर गइरहेको थियो । फेरि फर्केर आयो र हाइस्कुल जाने बाटोतिर रङ्गालिरह्यो । त्यसले कसैलाई खोजिरहेको जस्तो देखिन्थ्यो । त्यसको जीउभरि लुतै-लुतो लागेर त्यो कामिरहेको थियो ।

फेरि दस महिनापछि-

हाइस्कुलदेखि धेरै तल मुर्दा पोल्ने ठाउँमा एक दिन मुर्दाहट्टी रुङ्ने मान्छेले एउटा कुकुर र एउटा मान्छेको हाड एकै ठाउँमा गाँसिएको पायो । वर्षाको पानी र बालुवाले केही छोपेको, एउटा मान्छे र अर्को पशुको अस्थिपञ्जर त्यसरी जोरिएर त्यसले यो पृथ्वीको तहभन्दा पनि माथि, पशु र मान्छेको आत्मीयताको परिचय दिइरहेथ्यो... !

**[समाप्त]**